# युद्धको समयमा गैरसैनिक व्यक्तिहरूको संरक्षण सम्बन्धी (चौथो) महासन्धि, जेनेभा, १२ अगस्त, १९४९

## (७ फेब्रुअरी १९६४ मा नेपालले अनुमोदन गरेको)

**प्रस्तावना :**

युद्धको समयमा गैरसैनिक व्यक्तिहरूको संरक्षण सम्बन्धी महासन्धि निर्माणको निम्ति जेनेभामा २१ अप्रिलदेखि १२ अगष्ट, १९४९ ई. सम्म भएको कुटनीतिक सम्मेलनमा उपस्थित सरकारका पूर्णअधिकार सम्पन्न अधोहस्ताक्षरी प्रतिनिधिहरू निम्नअनुसारका कुराहरूमा सहमत भएका छन् :

### भाग १
### सामान्य प्रावधानहरू
### धारा १

उच्च संविदाकारी पक्षहरू सबै अवस्थाहरूमा प्रस्तुत महासन्धिको सम्मान गर्न र सम्मान सुनिश्चित गर्न वचतबद्ध भएका छन् ।

### धारा २

शान्तिको समयमा लागू गरिने प्रावधानहरूका अतिरिक्त, कुनै एक पक्षले युद्धको अवस्थालाई मान्यता नदिएको भए पनि प्रस्तुत महासन्धि दुई वा सोभन्दा बढी उच्च संविदाकारी पक्षहरूबीच हुने घोषित युद्ध वा सशस्त्र संघर्षका सबै अवस्थाहरूमा लागू हुनेछ ।

प्रस्तुत महासन्धि कुनै उच्च संविदाकारी पक्षको भू-भागको आंशिक वा पूर्ण कब्जामा लिइएको स्थितिहरूमा त्यस्तो कब्जा सशस्त्र प्रतिरोध विना नै नभएको भएता पनि नहुँदा पनि लागू हुनेछ ।

यद्यपि संघर्षका शक्तिहरूमध्ये कुनै एउटा शक्ति प्रस्तुत महासन्धिको पक्ष नभए पनि प्रस्तुत महासन्धिको पक्ष हुने शक्तिहरू तिनीहरूको पारस्परिक सम्बन्धमा प्रस्तुत महासन्धिद्वारा बाँधिने छन् । अझै, यदि महासन्धिको पक्ष नभएको शक्तिले पनि यसमा प्रावधानहरूलाई स्वीकार गर्छ र लागू गर्छ भने सो शक्तिसँगको सम्बन्धमा पनि प्रस्तुत महासन्धिद्वारा बाँधिने छन् ।

### धारा ३

कुनै एक उच्च संविदाकारी पक्षको भू-भागमा हुने गैरअन्तर्राष्ट्रिय प्रकृतिको सशस्त्र संघर्षका हकमा संघर्षका हरेक पक्ष न्यूनतम रुपमा देहायका प्रावधानहरू लागू गर्न बाध्य हुनेछ :-

(१) शत्रुतापूर्ण कारवाहीमा सक्रीय भाग नलिने सशस्त्र बलमा आफ्ना हतियार छाडिसकेका तथा बिरामी, घाइते, थुना वा अन्य त्यस्तै कारणले लड्न असक्षम, लड्न नसक्ने अवस्थामा पुगेका सैन्य दलका सदस्यहरू लगायत लडाइँमा सक्रिय रुपमा भाग नलिने व्यक्तिहरूलाई सबै परिस्थितिहरूमा जाति, वर्ण, धर्म वा आस्था, लिंग, जन्म वा धन सम्पत्ति वा त्यस्तै अन्य आधारमा कुनै प्रतिकूल भेदभाव नगरी मानवोचित व्यवहार गरिनेछ ।

यसका लागि हरेक समयमा र हरेक स्थानमा माथि उल्लिखित व्यक्तिहरूका हकमा देहायका कार्यहरू निषेधित छन् तथा निषेधित रहनेछन् :-

(क) जीवन तथा शरीर विरुद्ध हिंसा, खासगरी, सबै प्रकारका हत्या, अंगभंग, क्रूर व्यवहार र यातना,

(ख) बन्धक बनाउने,

(ग) व्यक्तिको प्रतिष्ठा माथि गम्भीर चोट पुऱ्याउने खालका कार्यहरू खासगरी होच्याउने वा अपमानजनक व्यवहार गर्नु,

(घ) सभ्य समाजद्वारा अपरिहार्य भनी मान्यता प्राप्त सबै न्यायिक प्रत्याभूतिहरू प्रदान गर्दै नियमित प्रक्रियाद्वारा गठित अदालतको पूर्व फैसला बिना सजाय तोक्ने र त्यसको कार्यान्वयन गर्ने ।

(२) घाइते र बिरामीहरूलाई जम्मा गरिनेछ र तिनलाई हेरविचार गरिने छ ।

रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्तो कुनै निष्पक्ष मानवीय निकायले संघर्षरत पक्षहरूलाई आफ्नो सेवा उपलब्ध गराउन सक्नेछ ।

संघर्षका पक्षहरूले प्रस्तुत महासन्धिका सम्पूर्ण वा केही प्रावधानहरूलार्य विशेष सम्झौताको माध्यमद्वारा कार्यान्वयन गराउन थप प्रयास समेत गर्नुपर्नेछ ।

उपर्युक्त प्रावधानहरू लागू भएको कारणले संघर्षरत पक्षहरूको कानुनी हैसियतमा असर पर्नेछैन ।

## धारा ४

प्रस्तुत महासन्धिद्वारा संरक्षित मानिसहरू तिनीहरू हुन् जो कुनै खास समयमा र जुनसुकै तरीकाले संघर्ष वा कब्जाको अवस्थामा आफूलाई आफू नागरिक नभएको संघर्षरत कुनै पक्ष वा कब्जा गर्ने शक्तिको हातमा परेको पाउँछन् ।

प्रस्तुत महासन्धिद्वारा नबाँधिएका देशका नागरिकहरू यसद्वारा संरक्षित हुने छैनन् । तटस्थ राष्ट्रका नागरिकहरू जो युद्धरत राष्ट्रको क्षेत्रमा आफूलाई पाउँछन् र सहयुद्धरत राष्ट्रका नागरिकहरू यदि उनीहरू नागरिक भएको देशको, उनीहरू जुन देशको हातमा परेका छन् । त्यो देशसँग सामान्य कुटनीतिक प्रतिनिधित्व रहेको स्थितिमा संरक्षित व्यक्तिको रुपमा मानिने छैनन् ।

तथापि भाग दुईका प्रावधानहरू, धारा १३ मा परिभाषित भए अनुसार प्रयोगमा व्यापक छन् ।

युद्ध मैदानमा घाइते तथा बिरामी भएका सैनिकहरूको अवस्थामा सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धि अथवा सशस्त्र सेनाका समुद्रमा घाइते, बिरामी र संकटग्रस्त जहाजका सशस्त्र सेनाका सदस्यहरूको अवस्था सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धि अथवा युद्धबन्दीहरूसँग गरिने व्यवहार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिद्वारा संरक्षित व्यक्तिहरू प्रस्तुत महासन्धिको अर्थमा संरक्षित व्यक्ति मानिने छैनन् ।

## धारा ५

संघर्षको कुनै पक्षको भू-भागमा कुनै संरक्षित व्यक्ति त्यो राष्ट्रको सुरक्षा विरुद्धको गतिविधिमा निश्चित रुपमा संदिग्ध देखिएको वा संलग्न भएकोमा सो पक्ष विश्वस्त भएमा त्यस्तो व्यक्तिले वर्तमान महासन्धि अन्तरगतको त्यस्ता अधिकार र सुविधाहरूको दावी गर्न पाउँदैन जसलाई यस्ता व्यक्तिहरूको पक्षमा प्रयोग गरिएमा सो राष्ट्रको सुरक्षाको प्रतिकूल हुनेछ ।

कुनै खास संरक्षित व्यक्ति कब्जा गरिएको क्षेत्रमा जासुस वा सुराकीको रुपम पक्राउ परेमा अथवा सो क्षेत्र कब्जा गर्ने शक्तिको विरुद्ध गतिविधिमा संलग्न रहेको निश्चित रुपमा शंका भएमा यस्तो व्यक्ति नितान्त सैनिक सुरक्षाबाट वा त्यस्तै आवश्यक पर्ने अवस्थामा प्रस्तुत महासन्धि अन्तरगतको संचारको हक गुमाउनेछ ।

तथापि, प्रत्येक मुद्दामा यस्ता व्यक्तिहरूसँग मानवीय व्यवहार गरिनेछ र पुर्पक्षको अवस्थामा प्रस्तुत महासन्धिमा तोकिएको निष्पक्ष र नियमित पुर्पक्षको अधिकारबाट बञ्चित गरिनेछैन । राज्य वा कब्जा गर्ने शक्तिको सुरक्षा अनुकूलको अवस्था अनुसार उनीहरूलाई पनि जतिसक्दो चाँडो संरक्षित व्यक्तिको रुपमा प्रस्तुत महासन्धि अन्तरगतका अधिकार र सुविधाहरू प्रदान गरिनेछ ।

## धारा ६

प्रस्तुत महासन्धि धारा २ मा उल्लिखित कुनै संघर्ष वा कब्जा शुरु हुनासाथ लागू हुनेछ ।

संघर्षका पक्षहरूको भूमिमा सैनिक कारवाहीहरू सामान्यतया अन्त्य भए पछि प्रस्तुत महासन्धिको कार्यान्वयन अन्त हुनेछ ।

कब्जा गरिएका भू-भागको हकमा प्रस्तुत महासन्धिको कार्यान्वयन सैनिक कारबाहीहरू बन्द भएको सामान्यतया एक वर्षपछि अन्त्य हुनेछ । तथापि कब्जाको अवधि भरी कब्जा गर्ने शक्तिले त्यस भू-भागको सरकारका कार्यहरू गरेसम्म प्रस्तुत महासन्धिका देहायका धाराहरू १ देखि १२, २७, २९ देखि ३४, ४७, ४९, ५१, ५२, ५३, ५९, ६१ देखि ७७ र १४३ द्वारा बाँधिनेछ ।

यस्ता मितिहरू पछि रिहाई, स्वदेश फिर्ती वा पुनर्स्थापना भएका संरक्षित व्यक्तिहरू त्यस बीचमा प्रस्तुत महासन्धिबाट लाभान्वित भइरहने छन् ।

## धारा ७

धारा ११, १४, १५, १७, ३६, १०८, १०९, १३२, १३३ र १४९ मा किटानी व्यवस्था गरिएका सम्झौताहरूका अतिरिक्त, उच्च संविदाकारी पक्षहरूले उनीहरूले छुट्टै व्यवस्थाहरू बनाउन उपयुक्त देखेका सबै विषयहरूबारे अरु विशेष सम्झौताहरू गर्न सक्नेछन् । कुनै पनि विशेष सम्झौताले प्रस्तुत महासन्धिमा परिभाषित संरक्षित व्यक्तिको अवस्थामा प्रतिकूल प्रभाव पार्दैन, न त उनीहरूलाई यसले प्रदान गरेको अधिकारहरू नै संकुचित गर्नेछ ।

माथि उल्लिखित सम्झौतामा वा पछि हुने सम्झौतामा किटानी साथ विपरीत प्रावधान भएको वा संघर्षका एक वा अर्को पक्षद्वारा उनीहरूबारे बढी अनुकूल उपायहरू गरिएकोमा बाहेक प्रस्तुत महासन्धि उनीहरूलाई लागू भई रहेसम्म संरक्षित व्यक्तिहरू यस्ता सम्झौताहरूबाट लाभान्वित भइरहने छन् ।

## धारा ८

संरक्षित व्यक्तिहरूले कुनै पनि अवस्थामा प्रस्तुत महासन्धिद्वारा र पूर्ववर्ती धारामा उल्लेख भए अनुसारका यस्तो अन्य सम्झौताहरू भए, सोद्वारा तिनीहरूलाई सुनिश्चित गरिएका अधिकारहरूलाई आंशिक वा पूर्ण रुपमा त्याग गर्ने छैनन् ।

## धारा ९

प्रस्तुत महासन्धि संघर्षरत पक्षहरूको हितको रक्षा गर्ने कर्तव्य भएका संरक्षक शक्तिहरूको सहयोग र निगरानीमा लागू हुनेछ । यो उद्देश्यका लागि संरक्षक शक्तिहरूले उनीहरूका कुटनीतिक वा वाणिज्यदूत सम्बन्धी कर्मचारीहरूका अतिरिक्त उनीहरूका आफ्नै नागरिकहरू मध्येबाट अथवा तटस्थ शक्तिका नागरिकहरू मध्येबाट प्रतिनिधि नियुक्त गर्न सक्नेछन् । उक्त प्रतिनिधिहरूले उनीहरूले जुन शक्तिसँग तिनीहरूको कर्तव्य निर्वाह गर्नुपर्ने हो, त्यस्तो शक्तिको स्वीकृति लिनु पर्नेछ । संघर्षरत पक्षहरूले संरक्षक शक्तिहरूमा प्रतिनिधिहरू वा प्रतिनिधिमण्डलको

काममा सम्भव भएसम्म अधिकतम सहजीकरण गर्नुपर्नेछ । संरक्षित शक्तिहरूमा प्रतिनिधिहरूले जुनसुकै अवस्थामा पनि प्रस्तुत महासन्धि अन्तर्गत उनीहरूको उद्देश्य (कर्तव्य) को सीमा उल्लंघन गर्ने छैनन् । वास्तवमा तिनीहरूले जहाँ आफ्नो कर्तव्य निर्वाह गर्नुपर्ने हो सो राष्ट्रको सुरक्षाको अनिवार्य आवश्यकताहरूलाई ध्यान दिनेछन् ।

## धारा १०

प्रस्तुत महासन्धिका प्रावधानहरूले रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा अन्य निष्पक्ष मानवतावादी संगठनहरूले संघर्षका सम्बन्धित पक्षहरूको सहमतिको अधीन रही गैरसैनिक व्यक्तिहरूको उद्धार र कल्याणका लागि गर्ने कुनै पनि मानवीय काम कारवाहीलाई बाधा पुऱ्याउने छैनन् ।

## धारा ११

प्रस्तुत महासन्धिको आधारमा उच्च संविदाकारी पक्षहरू निष्पक्षता र प्रभावकारीता सम्बन्धी सबै प्रत्याभूतिहरू प्रदान गर्ने कुनै पनि संगठनलाई कुनै पनि समयमा संरक्षक शक्तिले गर्नुपर्ने कर्तव्य सुम्पन सहमत हुन सक्छन् ।

माथिको पहिलो अनुच्छेदमा व्यवस्था गरिएको कुनै संरक्षक शक्ति वा संगठनका गतिविधिहरूबाट, प्रस्तुत महासन्धिद्वारा संरक्षित व्यक्तिहरूले जुनसुकै कारणले फाइदा पाएनन् वा फाइदा पाउन छाडे भने कब्जा गर्ने शक्तिले कुनै तटस्थ राष्ट्र वा त्यस्तो संगठनलाई संघर्षका पक्षहरूले तोकेको संरक्षक शक्तिले प्रस्तुत महासन्धि अन्तरगत गर्दै आएका कार्यहरू गर्ने काम जिम्मा लिन अनुरोध गर्नेछ ।

यदि यस अनुरुप संरक्षणको व्यवस्था मिलाउन सकिएन भने कब्जा गर्ने शक्तिले रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्तो मानवतावादी संगठनलाई संरक्षक शक्तिहरूले प्रस्तुत महासन्धि अन्तर्गत गर्दै आएको मानवीय कार्यहरू गर्ने जिम्मा लिन यस धाराका प्रावधानहरूको अधीन रही अनुरोध गर्नेछ वा त्यस्ता संस्थाले गरेको सेवाको प्रस्ताव स्विकार गर्नेछ ।

कुनै तटस्थ शक्ति अथवा सम्बद्ध शक्तिले आमन्त्रण गरेको शक्ति अथवा यस्ता प्रयोजनका लागि आफूलाई प्रस्तुत गरेको शक्तिले प्रस्तुत महासन्धिद्वारा संरक्षित व्यक्तिहरू आश्रित रहेको संघर्षको पक्षप्रति जिम्मेवारी पूर्ण व्यवहार गर्नुपर्नेछ र समुचित कामको जिम्मा लिन र त्यसलाई निष्पक्ष रुपमा सम्पादन गर्ने स्थितिमा आफू रहेको भन्ने बारेमा पर्याप्त आश्वासनहरू दिनुपर्नेछ ।

शक्तिहरू बीच भएको कुनै पनि विशेष सम्झौताद्वारा माथि उल्लिखित प्रावधानहरूको न्यूनीकरण गरिने छैन जहाँ सामरिक कारणले वा खास गरेर उक्त राष्ट्रको भू-भागको सम्पूर्ण वा ठूलो भाग

कब्जामा परेकोले अर्को शक्ति राष्ट्र वा निजको गठबन्धन सहयोगीसँग ती दुई मध्ये एक राष्ट्रको वार्ता गर्ने स्वतन्त्रता अस्थायी रुपमा भए पनि सीमित गरिएको छ ।

प्रस्तुत महासन्धिमा जहाँ जहाँ संरक्षक शक्तिको उल्लेख गरिएको छ त्यस्तो उल्लेखन यस धाराको सोही अर्थमा वैकल्पिक संगठनहरूका हकमा पनि लागू हुनेछ । यो धाराका प्रावधानहरू तटस्थ राष्ट्रका नागरिकहरू, जो कब्जा गरिएको क्षेत्रमा हुन्छन् वा उनीहरू नागरिक भएको राष्ट्रको सामान्य कुटनीतिक प्रतिनिधित्व नभएका युद्धरत् राष्ट्रको भू-भागमा हुन्छन्, तिनीहरूको हकमा पनि विस्तारित हुन्छन् र लागू हुन्छन् ।

## धारा १२

संरक्षित व्यक्तिहरूको हितको लागि खास गरी प्रस्तुत महासन्धिका प्रावधानहरू लागू गर्ने वा व्याख्या गर्ने सम्बन्धमा युद्धरत पक्षहरूबीच असहमती भएमा, संरक्षक शक्तिहरूले त्यस्तो असहमती समाधान गर्नका लागि आफ्नो पदीय सेवा प्रदान गर्नेछन् ।

यो उद्देश्यको लागि प्रत्येक संरक्षक शक्तिले कुनै एउटा पक्षको आमन्त्रणमा वा उसको आफ्नै सक्रियतामा संघर्षरत पक्षहरू समक्ष तिनीहरूका प्रतिनिधिहरूको, खासगरी संरक्षित व्यक्तिहरूको लागि उत्तरदायी अधिकारीहरूको प्रतिनिधिहरूको, बैठक उपयुक्त तरीकाले छनौट गरिएको समभवतः तटस्थ भू-भागमा गर्न प्रस्ताव गर्न सक्नेछ । युद्धरत पक्षहरू यस उद्देश्यका लागि तिनीहरू कहाँ पठाइएको प्रस्तावलाई कार्यान्वयन गर्न बाध्य हुनेछन् । संरक्षक शक्तिहरूले आवश्यक भएमा तटस्थ शक्तिसँग सम्बन्धित व्यक्ति अथवा रेडक्रसको अन्तर्राष्ट्रिय समितिद्वारा अधिकार प्रत्यायोजित व्यक्तिलाई संघर्षरत पक्षहरूको स्वीकृतिको लागि प्रस्ताव गर्न, सक्छन्, जसलाई यस्तो बैठकमा भाग लिन आमन्त्रण गरिनेछ ।

## भाग २

## युद्धका केही परिणाम विरुद्ध जनताहरूको सामान्य संरक्षण

## धारा १३

भाग दुई अन्तरगतका प्रावधानहरूले खास गरेर जाति, राष्ट्रियता, धर्म वा राजनीतिक विचारमा आधारित कुनै प्रतिकूल भेदभाव विना संघर्षरत मुलुकहरूका सम्पूर्ण जनताहरूलाई समेट्छन् र युद्धबाट उत्पन्न कष्टलाई कम गर्ने अभिप्राय राख्दछन् ।

## धारा १४

शान्तिको समयमा उच्च संविदाकारी पक्षहरूले र लडाइँ शुरु भइसकेपछि सम्बन्धित पक्षहरूले आफ्नै भू-भागमा र यदि आवश्यकता भए कब्जा गरिएको क्षेत्रमा अस्पताल र सुरक्षित क्षेत्रहरू र

इलाकाहरू स्थापना गर्न सक्छन् जहाँ घाइते, बिरामी र वृद्ध मानिसहरू, पन्ध्र वर्षमुनिका बच्चाहरू, गर्भवती महिला र सात वर्षमुनिका बच्चाहरू भएकी आमाहरूलाई युद्धको असरबाट बचाउन सकियोस् ।

लडाइँ शुरु हुँदा र चलिरहेको समयमा सम्बन्धित पक्षहरूले तिनीहरूले सृजना गरेका क्षेत्रहरू र इलाकाहरूको पारस्परिक मान्यताको लागि सम्झौताहरू गर्न सक्छन् । यो उद्देश्यका लागि तिनीहरूले आवश्यक सम्झेका संशोधन सहित प्रस्तुत महासन्धिसँग संलग्न भएको मस्यौदा सम्झौताका प्रावधानहरूको कार्यान्वयन गर्न सक्छन् ।

यस्ता अस्पताल, सुरक्षित क्षेत्र र इलाकाहरूको स्थापना गर्ने र पहिचान गर्ने कार्यलाई सहज बनाउन संरक्षक शक्ति र रेडक्रसको अन्तर्राष्ट्रिय समितिलाई आफ्नो असल प्रभाव/सद्भाव प्रदान गर्न आमन्त्रित गरिन्छ ।

## धारा १५

संघर्षरत कुनै पक्षले सोझै वा कुनै तटस्थ राष्ट्र वा मानवीय संगठन मार्फत कुनै भेदभाव विना तल उल्लिखित व्यक्तिहरूलाई युद्धको असरबाट जोगाउन आश्रय दिनको लागि युद्ध भइरहेको क्षेत्रमा तटस्थीकृत क्षेत्रहरू स्थापना गर्नको लागि विपक्षीसँग प्रस्ताव गर्न सक्छ :-

(क) घाइते वा बिरामी लडाकुहरू वा गैर लडाकुहरू,

(ख) लडाइँमा कुनै भाग नलिने गैरसैनिक व्यक्तिहरू र उ त्यो क्षेत्रमा बस्दासम्म कुनै सैनिक प्रकृतिको कार्य नगर्ने व्यक्तिहरू ।

सम्बन्धित पक्षहरू प्रस्तावित तटस्थीकृत क्षेत्रको भौगोलिक अवस्था, प्रशासन, खाद्यान्न आपूर्ति र पर्यवेक्षण बारेमा सहमत भएपछि संघर्षका प्रतिनिधिहरूद्वारा एउटा लिखित सम्झौता सम्पन्न गरी हस्ताक्षर गरिनेछ । त्यो सम्झौताले क्षेत्रको तटस्थीकरणको प्रारम्भ र अवधि निश्चित गर्छ ।

## धारा १६

घाइते र बिरामीका साथै अशक्त र गर्भवती आमाहरू खास सुरक्षा र सम्मानका विषय हुनेछन् ।

सैनिक दृष्टिकोणले अनुमति दिएसम्म संघर्षरत प्रत्येक पक्षले मृतक र घाइतेहरूको खोजी गर्न, संकटग्रस्त जहाजका र अरु गम्भीर खतरातिर उन्मुख व्यक्तिहरूलाई सहयोग गर्न र तिनीहरूलाई लुट वा खराब व्यवहारबाट संरक्षण गर्न चालिएका पाइलाहरूलाई सघाउनेछ ।

## धारा १७

संघर्षका पक्षहरूले घाइते, बिरामी, अशक्त र वृद्ध मानिसहरू, बच्चाहरू र प्रसूतिका बिरामीहरूलाई घेरिएको वा घेरा हालेको क्षेत्रबाट हटाउनको लागि र सबै धार्मिक पूजारीहरू, चिकित्सा कर्मचारीहरू र चिकित्सा सामग्रीहरूको यस्ता क्षेत्रहरूमा आवागमनको लागि स्थानीय स्तरमा सम्झौता गर्न प्रयत्न गर्नेछन् ।

## धारा १८

घाइते र बिरामी, अशक्त र प्रसूतिका बिरामीहरूलाई हेरचाह गर्न स्थापित गैरसैनिक अस्पतालहरू कुनै पनि अवस्थामा, आक्रमणको लक्ष्य बन्न सक्दैनन् बरु संघर्षका पक्षहरूद्वारा सबै समयमा सम्मानित र संरक्षित हुनेछन् ।

संघर्षका पक्षराष्ट्रहरूले सबै गैरसैनिक अस्पतालहरूलाई तिनीहरू गैरसैनिक अस्पताल भएको दर्शाउँदै प्रमाणपत्र प्रदान गर्नेछन् । तिनीहरूले ओगटेका भवनहरू त्यस्तो कुनै उद्देश्यको लागि प्रयोग गरिएको छैन, जसले यी अस्पतालहरूलाई धारा १९ अनुसारको संरक्षणबाट बन्चित गरोस् ।

यदि राष्ट्रले अनुमति दिएमा गैरसैनिक अस्पतालहरूलाई युद्ध मैदानमा घाइते तथा बिरामी भएका सैनिकहरूको अवस्था सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा ३८ मा प्रावधान भएअनुसारको चिन्हद्वारा अंकित गरिनेछ ।

सैनिक दृष्टिकोणले अनुमति दिएसम्म युद्धरत पक्षहरूले कुनै पनि सम्भाव्य शत्रुवत् कारबाहीबाट बचाउनको लागि शत्रुको जमिन, वायु र जल सेनाले स्पष्ट देख्न सक्ने गरी फरक किसिमको विशिष्ट चिन्ह राख्न आवश्यक कदम चाल्ने छन् ।

सैनिक लक्ष्यहरूको नजिक रहेको कारणले अस्पतालहरूलाई पर्न सक्ने खतरालाई ध्यानमा राखेर त्यस्ता लक्ष्यहरूबाट यस्ता अस्पतालहरूलाई जतिसक्दो टाढा राख्न सिफारिश गरिन्छ ।

## धारा १९

आफ्नो मानवतावादी काम कारबाही भन्दा बाहिर शत्रुलाई हानिकारक हुने काम गर्न उनीहरूलाई प्रयोग नगरेसम्म, गैरसैनिक अस्पतालहरूले पाउनु पर्ने संरक्षणहरू समाप्त हुने छैनन् । तर सबै उपयुक्त अवस्थाहरूमा उचित समय सीमा सहित समुचित चेतावनी दिएपछि र यस्ता चेतावनीलाई बेवास्ता गरेपछि मात्र संरक्षण समाप्त हुन सक्छ ।

सशस्त्र सेनाका घाइते वा बिरामी सदस्यहरूलाई ती अस्पतालहरूमा हेरचाह गरेको अथवा यस्ता लडाकुहरूबाट प्राप्त भएका साना हातहतियारको मौजुदगी र अझैसम्म पनि उपयुक्त सेवालाई हस्तान्तरण गरी नसकिएको तथ्यलाई, शत्रुलाई गरिएको हानिकारक कार्य मानिने छैन ।

## धारा २०

घाइते र बिरामी, गैरसैनिक व्यक्तिहरू, अशक्त र प्रसूतिका बिरामीहरूको खोजी गर्ने, हटाउने, ढुवानी गर्ने र हेरचाह गर्ने कार्यमा संलग्न कर्मचारी सहित गैरसैनिक अस्पतालको प्रशासन र संचालनमा नियमित र पूर्णरुपमा संलग्न भएका व्यक्तिहरूलाई सम्मान र संरक्षण गरिनेछ ।

कब्जा गरिएको क्षेत्रमा र सैनिक कारबाही हुने क्षेत्रमा माथि उल्लिखित व्यक्तिहरूलाई उनीहरूको दर्जा खुलेको, बाहकको तस्बीर भएको र जिम्मेवार पदाधिकारीको छाप लागेको परिचयपत्रका साथै उनीहरूले कर्तव्यपालन गर्दा आफ्नो बायाँ पाखुरामा धारण गरेको, छाप लागेको पानीले नभिज्ने पट्टा (आर्मलेट) बाट पहिचान गरिनेछ । यो पट्टा राज्यद्वारा जारी गरिनेछ र युद्ध मैदानमा घाइते तथा बिरामी भएका सैनिकहरूको अवस्था सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा ३८ मा उल्लिखित चिन्ह अंकित हुनेछ ।

गैरसैनिक अस्पतालको प्रशासन र संचालनमा संलग्न अन्य व्यक्तिहरू सम्मान र सुरक्षाका हकदार हुनेछन् र उनीहरूलाई यस्तो काममा खटाइएको बेला यो धारा र यस अन्तर्गत तोकिएका अवस्थाहरूको आधारमा सो पट्टा (आर्मलेट) लगाउने अधिकार हुनेछ । त्यो  परिचय पत्रमा उनीहरू जुन काममा खटाइएका हुन्, सो उल्लेख गरिएको हुन्छ ।

प्रत्येक अस्पतालको व्यवस्थापनले हर समय सक्षम राष्ट्रिय वा कब्जा गर्ने अधिकारीहरूको प्रयोजनको लागि यस्ता कर्मचारीहरूको एउटा अद्यावधिक सूची राख्नेछ ।

## धारा २१

घाइते र बिरामी गैरसैनिक व्यक्तिहरू अशक्त र प्रसूतिका बिरामीहरूलाई ओसारपसार गर्ने जमिनमा चल्ने सवारी साधन वा अस्पतालको रुपमा रहेका रेल वा विशेष प्रकारले सुसज्जित समुद्रका जहाजहरूका समूहहरूलाई धारा १८ मा अस्पतालहरूको लागि प्रावधान गरिएकै तरीका अनुसार सम्मान र संरक्षण गरिनेछ र, युद्ध मैदानमा घाइते वा बिरामी भएका सैनिकहरूको अवस्था सुधार सम्बन्धी १२ अगस्ट १९४९ को जेनेभा महासन्धिको धारा ३८ मा निर्दिष्ट विशिष्ट चिन्ह राज्यको सहमति अनुसार अंकित गरिनेछ ।

## धारा २२

घाइते र बिरामी गैरसैनिकहरू, दुर्बल र प्रसूतिका बिरामीहरू वा चिकित्सा कर्मचारी र उपकरणहरूको ढुवानीका लागि मात्र खटाइएका हवाई जहाजहरूमाथि आक्रमण गरिने छैन बरु सम्बन्धित युद्धरत पक्षहरू बीच विशेष रुपमा सहमति जनाइएको उचाई, समय र मार्गमा उडान भर्दा सम्मान गरिने छ ।

त्यस्ता यानहरू युद्ध मैदानमा घाइते वा बिरामी भएका सैनिकहरूको अवस्था सुधार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा ३८ मा व्यवस्था भए अनुसारको विशिष्ट चिन्हद्वारा अंकित हुन सक्नेछन् ।

अन्यथा सहमति भएमा बाहेक शत्रु वा शत्रुले कब्जा गरेको क्षेत्रमाथि उडानहरू निषेध गरिएका छन् ।

त्यस्ता जहाजहरूले जमिनमा ओर्लन गरिएका हरेक आदेशलाई पालन गर्ने छन् । यसरी अवतरण गराइएमा कुनै परीक्षण आवश्यक गर्नुपर्ने भए सो गरे पश्चात आफ्ना यात्रुहरू सहित, त्यो जहाजले आफ्नो उडान जारी राख्न सक्नेछ ।

## धारा २३

प्रत्येक उच्च संविदाकारी पक्षले आफ्नो विपक्षी नै भए पनि अर्को उच्च संविदाकारी पक्षका असैनिकहरूका लागि आवश्यक पर्ने चिकित्सा र अस्पताल भण्डार र धार्मिक पूजालाई चाहिने सबै मालसामानको खेप, स्वतन्त्र आवत-जावत गर्न दिनेछ । यसैगरी यसले सबै अत्यावश्यक खाद्यान्न, लत्ताकपडा र पन्ध्र वर्ष मुनिका बालबालिका, गर्भवती महिला र प्रसूतिका रोगीको लागि बलवर्धक औषधी समेतको खेपको स्वतन्त्र आवत-जावतको अनुमति दिनेछ ।

अघिल्लो अनुच्छेदमा उल्लिखित, ढुवानीका सामानहरूलाई स्वतन्त्र आवत-जावत गर्न संविदाकारी पक्षले अनुमति दिने दायित्व सो पक्षले डर मान्नु पर्ने, देहायको कुनै गम्भीर कारण छैन भनी सन्तुष्ट हुने अवस्थामा आधारित छ :-

(क) ढुवानीका सामानहरू तिनीहरूको गन्तव्यबाट विमुख हुन सक्ने,

(ख) नियन्त्रण प्रभावकारी हुन नसक्ने, अथवा

(ग) माथि उल्लिखित वस्तुहरूको सट्टा भर्नाबाट शत्रु आफैले प्रदान वा उत्पादन गर्नुपर्ने वा यस्ता वस्तु उत्पादनको निम्ति आवश्यक पर्ने वस्तु, सेवा वा सुविधा उपलब्ध हुन गई शत्रुको शक्ति वा अर्थतन्त्रलाई निश्चित फाइदा पुग्न सक्ने भएमा ।

यो धाराको पहिलो अनुच्छेदमा संकेत गरिएका ढुवानीका सामानहरूको आवत-जावतलाई अनुमति दिने शक्तिको संरक्षक शक्तिहरूको स्थानीय सुपरिवेक्षणमा त्यस्ता सामानहरू लाभान्वित हुने व्यक्तिहरूलाई वितरण गर्नुपर्ने शर्तमा त्यस्तो अनुमति आधारित गर्न सक्छ ।

यस्ता ढुवानीका सामानहरू जतिसक्दो चाँडो पठाइने छन् र त्यस्तो स्वतन्त्र आवागमनको अनुमति प्रदान गर्ने शक्तिलाई त्यस्तो आवागमनका प्राविधिक प्रावधानहरूलाई तोक्न अधिकार हुनेछ ।

## धारा २४

संघर्षरत पक्षहरूको युद्धको परिणाम स्वरुप टुहुरा भएका अथवा आफ्ना बाबु आमाबाट छुट्याइएका पन्ध्र वर्षमुनिका केटाकेटीहरूलाई उनीहरूको आफ्नै साधन स्रोतमा छाड्ने छैनन् र उनीहरूको जीविका, उनीहरूको धर्मको अभ्यास र शिक्षालाई सधैंभरी सहज बनाउनेबारे सुनिश्चित गर्न आवश्यक उपायहरू गर्नेछन् । उनीहरूको शिक्षाबारे सम्भव भएसम्म मिल्दोजुल्दो साँस्कृतिक परम्परा भएका मानिसहरूलाई जिम्मेवारी दिइनेछ ।

संघर्षका पक्षहरूले यदि कुनै संरक्षक शक्ति भए त्यो शक्तिको सहमतिमा र पहिलो अनुच्छेदमा उल्लिखित सिद्धान्तहरूको अनुशरणको लागि उचित सुरक्षाहरू अन्तरगत संघर्षको अवधि भरीका लागि ती बालबालिकाहरूलाई तटस्थ राष्ट्रमा राख्ने कामलाई सहज बनाउनेछन् ।

यसका अलावा उनीहरूले १२ वर्षमुनिका सबै केटाकेटीहरूलाई लगाउने परिचयपत्र बिल्ला (डिस्क) वा अरु कुनै तरीकाले पहिचान हुने व्यवस्था मिलाउन प्रयास गर्नेछन् ।

## धारा २५

संघर्षरत पक्षको क्षेत्रमा भएका अथवा यसले कब्जा गरेको क्षेत्रमा भएका सबै व्यक्तिहरूलाई नितान्त व्यक्तिगत प्रकृतिका समाचारहरू जहाँसुकै भए पनि उनीहरूको परिवारका सदस्यहरूलाई पठाउन र तिनीहरूबाट समाचार प्राप्तगर्न सक्षम बनाइनेछ । यो पत्रव्यवहारलाई द्रूतगतिमा र अनुचित ढिलाई नगरी पठाइनेछ ।

यदि परिस्थितिको परिणामस्वरुप साधारण हुलाकद्वारा पारिवारिक पत्र व्यवहार, आदान प्रदान गर्न कठिन वा असम्भव हुन्छ भने संघर्षका सम्बन्धित पक्षहरूले धारा १४० मा गरिएको प्रावधान केन्द्रीय निकाय जस्तो तटस्थ मध्यस्थकर्तालाई आवेदन गर्नेछन् र यसको परामर्शमा उनीहरूले आफ्नो कर्तव्य पूरा गर्ने दायित्व सबैभन्दा उत्तम अवस्थामा खास गरी राष्ट्रिय रेडक्रस (रेडक्रसेन्ट (रातो अर्धचन्द्र), रेड लायन एण्ड सन (रातो सिंह र सूर्य) जस्ता संस्थाहरूको सहयोगमा कसरी निर्वाह गर्न सकिन्छ भन्ने बारे निर्णय गर्नेछन् ।

यदि संघर्षरत पक्षहरूले पारिवारिक पत्र व्यवहारलाई सीमित गर्न आवश्यक ठान्छन् भने, त्यस्तो सीमा स्वतन्त्र रुपले छानिने पच्चीस ओटा मात्र शब्दहरू भएको प्रमाणिक ढाँचाको बाध्यात्मक प्रयोगमा सीमित हुनेछ र यस्तो संचार महिनामा एक पटकमात्र गर्ने भनी सीमित हुनेछ।

## धारा २६

संघर्षरत प्रत्येक पक्षले युद्धको कारणले तितर-बितर भएका परिवारका सदस्यहरूको सम्पर्कलाई नविकरण गर्ने र सम्भव भए एक आपसमा भेटघाट गर्ने उद्देश्यले, ती सदस्यहरूले गरेको प्रत्येक सोधपूछलाई सहज बनाउने छन् । यदि यस्तो पक्षलाई खास गरेर यस कार्यमा संलग्न संगठनहरू स्वीकार्य भएमा र ती यसका सुरक्षा नियमावलीहरू अनुकूल भएमा, यसले संगठनका कार्यलाई हौसला प्रदान गर्नेछ।

## भाग ३
## संरक्षित व्यक्तिहरूको हैसियत र व्यवहार
## खण्ड १
## संघर्षरत पक्षहरूको भू-भाग र कब्जा गरिएको भू-भागसँग सम्बन्धित साझा प्रावधानहरू
## धारा २७

संरक्षित व्यक्तिहरू सबै अवस्थामा उनीहरूको जीउ, सम्मान, पारिवारिक अधिकार, धार्मिक आस्था र प्रथाहरू र उनीहरूको रीतिरिवाजको सम्मानका हकदार हुन्छन् । उनीहरूलाई सधैं मानवीय व्यवहार गरिनेछ र उनीहरूलाई खास गरी हिंसाका सबै कार्यहरू वा सो को धम्की, अपमान र सार्वजनिक चिन्ताको विरुद्ध संरक्षण गरिनेछ।

महिलाहरूलाई, विशेष रुपले उनीहरूको सम्मानप्रतिको कुनै पनि आक्रमण खासगरी बलात्कार, बलपूर्वक गराइएको बेश्यावृत्ति वा कुनै प्रकारको अमर्यादित दुर्व्यवहारको विरुद्धमा संरक्षण गरिनेछ।

संरक्षित व्यक्तिहरूको स्वास्थ्यको अवस्था, उमेर र लिंगसँग सम्बन्धित प्रावधानहरूप्रति कुनै पूर्वाग्रह नराखी उनीहरू जसको अधीन रहेका छन्, सो पक्षले जाति, धर्म अथवा राजनीतिक विचारको आधारमा कुनै प्रतिकूल भेदभाव नगरी सबै संरक्षित व्यक्तिहरूलाई समान दृष्टिकोणबाट व्यवहार गर्नेछ।

तथापि संघर्षका पक्षहरूले युद्धको परिणामस्वरुप संरक्षित व्यक्तिहरूको सम्बन्धमा आवश्यक हुन सक्ने नियन्त्रण र सुरक्षाका उपायहरू गर्न सक्छन्।

## धारा २८

कुनै संरक्षित व्यक्तिको उपस्थितिलाई निश्चित ठाउँहरू वा क्षेत्रहरूलाई सैनिक कारबाहीबाट उन्मुक्त गर्नको लागि प्रयोग गर्न सकिने छैन ।

## धारा २९

आफ्नो हातमा संरक्षित व्यक्तिहरू रहन सक्ने संघर्षको पक्षले उनीहरूप्रति व्यहोर्नुपर्ने कुनै व्यक्तिगत उत्तरदायित्वको साथै आफ्ना प्रतिनिधिहरूले तिनीहरूलाई गर्ने व्यवहारको लागि पनि उत्तरदायी हुनेछ ।

## धारा ३०

संरक्षित व्यक्तिहरूलाई संरक्षक शक्तिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति, निजहरू रहेको देशको राष्ट्रिय रेडक्रस (रातो अर्धचन्द्र, रातो सिंह र सूर्य) सोसाइटीका साथै तिनीहरूलाई सहयोग गर्न सक्ने अन्य कुनै संस्था समक्ष निवेदन गर्न सबै सुविधा प्राप्त हुनेछ ।

सैनिक वा सुरक्षाको दृष्टिकोणबाट तोकिएको सीमाभित्र ती विभिन्न संगठनहरूलाई, अधिकारीहरूद्वारा सो उद्देश्यका लागि सबै सुविधाहरू प्रदान गरिनेछ । संरक्षक शक्तिहरूका र धारा १४३ मा प्रावधान गरिएको रेडक्रसको अन्तर्राष्ट्रिय समितिका प्रतिनिधिहरूका भ्रमण बाहेक बन्दी बनाउने वा कब्जा गर्ने शक्तिले आध्यात्मिक सहयोग गर्ने अथवा भौतिक सहायता प्रदान गर्ने उद्देश्य लिएका अरु संगठनका प्रतिनिधिहरूले संरक्षित व्यक्तिहरूलाई भेट्ने काममा सम्भव भएसम्म सहयोग पुऱ्याउनेछन् ।

## धारा ३१

संरक्षित व्यक्तिहरू विरुद्ध, खासगरी उनीहरूबाट वा तेस्रो पक्षहरूबाट सूचना प्राप्त गर्नको लागि, कुनै पनि शारीरिक वा मानसिक बल प्रयोग गरिनेछैन ।

## धारा ३२

उच्च संविदाकारी प्रत्येक पक्षहरू उनीहरूको हातमा, परेका संरक्षित व्यक्तिहरूलाई शारीरिक पीडा दिने वा सत्यानाश गर्ने प्रकृतिको कुनै पनि कार्य गर्न हरेक पक्ष प्रतिबन्धित छ, निषेधित छ भनी विशेष रुपमा सहमत भएका छन् । यो प्रतिबन्ध हत्या, यातना, शारीरिक सजाय, अंगभंग र संरक्षित व्यक्तिको औषधोपचारको लागि आवश्यक नभएको वैज्ञानिक वा चिकित्सकीय प्रयोगको लागि मात्र नभै अन्य कुनै सैनिक वा गैरसैनिक प्रतिनिधिद्वारा अपनाइने बर्बरतापूर्ण उपायहरूका लागि पनि लागू हुन्छ ।

## धारा ३३

कुनै संरक्षित व्यक्तिलाई उसले वा उनीले व्यक्तिगत रुपमा नगरेको कसूरको लागि सजाय गर्न सकिनेछैन । सामूहिक दण्ड र त्यस्तै डर, त्रास वा आतंकवादका सबै उपायहरू निषेधित छन् । युद्धमा लूटपाट निषेधित छ ।

संरक्षित व्यक्तिहरू र तिनीहरूको सम्पत्तिको विरुद्धमा बदला लिने कार्यहरू निषेधित छन् ।

## धारा ३४

बन्धक बनाउने कार्य निषेधित छ ।

## खण्ड २

## संघर्षका पक्षको भू-भागमा विदेशीहरू

## धारा ३५

संघर्षको आरम्भ हुँदा वा संघर्षको समयमा देश छाड्ने इच्छा गर्ने सबै संरक्षित व्यक्तिहरूलाई उनीहरूको प्रस्थान, देशको राष्ट्रिय हित विपरीत नभएमा त्यसो गर्ने अधिकार हुनेछ । देश छाड्नको लागि यस्ता व्यक्तिहरूका निवेदनहरूबारे नियमित रुपमा स्थापित प्रक्रियाअनुसार निर्णय गरिनेछ र त्यस्तो निर्णय यथासम्भव चाँडो गरिनेछ । देश छाड्नलाई अनुमित प्रदान गरिएका ती व्यक्तिहरूले आफ्नो यात्राको लागि आवश्यक रकमको प्रबन्ध गर्न सक्नेछन् र उनीहरूले आफूसँग समुचित मात्रामा आफ्ना सम्पत्ति र व्यक्तिगत प्रयोजनका सामानहरू लैजान पाउनेछन् ।

यदि यस्तो कुनै व्यक्तिलाई त्यो भू-भाग छाड्ने अनुमति प्रदान गरिंदैन भने निजलाई त्यस्तो अस्वीकृति विरुद्ध कब्जा गर्ने शक्तिले सो प्रयोजनको लागि तोकेको उचित अदालत वा प्रशासकीय बोर्डबाट जति सक्दो चाँडो पुनर्विचार गरी पाउँ भनी माग्ने अधिकार हुनेछ ।

अनुरोध गर्दा, यदि सुरक्षा कारणले नरोकेमा वा सम्बन्धित व्यक्तिले विरोध नगरेमा, सो भू-भाग छोड्ने अनुमतिको लागि गरिएको अनुरोधको अस्वीकारका कारणहरू र छोड्न पाउने अनुमतिको अनुरोध अस्वीकार गरिएका सबै व्यक्तिहरूका नामहरू संरक्षक शक्तिका प्रतिनिधिहरूलाई यथाशिघ्र उपलब्ध गराइनेछ ।

## धारा ३६

अघिल्लो धारा अन्तरगत अनुमति प्रदान गरिएका प्रस्थानहरूलाई सुरक्षा, स्वास्थ्य, सरसफाइ र खानाको सम्बन्धमा सन्तोषजनक अवस्थाहरूमा संचालन गरिनेछ । बन्धक बनाउने शक्तिको भू-भागबाट प्रस्थान गर्ने बिन्दुदेखि सो सम्बन्धमा हुने सबै खर्चहरू गन्तव्यको देशले व्यहोर्ने छ अथवा

तटस्थ राष्ट्रमा बासस्थान मिलाउने अवस्थामा लाभान्वित हुने नागरिकहरूको शक्तिद्वारा व्यहोरिनेछ । यदि आवश्यकता परेमा यस्ता आवागमन सम्बन्धी व्यवहारिक विवरणहरूबारे सम्बन्धित शक्तिहरूबीच हुने विशेष सम्झौताद्वारा निर्धारण गर्न सकिनेछ।

यस अघि उल्लिखित कुराले संघर्षका पक्षहरूद्वारा शत्रुको हातमा भएका तिनीहरूका नागरिकहरूलाई आदान-प्रदान गर्ने र स्वदेश फिर्ता गर्ने सम्बन्धमा सम्पन्न गर्न सकिने विशेष सम्झौताप्रति प्रतिकूल प्रभाव पार्नेछैन ।

## धारा ३७

पुर्पक्षको लागि वा स्वतन्त्रता हनन हुने गरी सजाय पाई कारागारमा थुनिएका संरक्षित व्यक्तिहरूलाई सो कैदको अवधिमा मानवतापूर्ण व्यवहार गरिनेछ।

उनीहरूको रिहाई हुनासाथ उनीहरूले यस अघिका धाराहरूमा भएका व्यवस्था अनुकूल सो भू-भाग छाड्ने अनुमति माग्न सक्नेछन्।

## धारा ३८

वर्तमान महासन्धिले, खासगरी धाराहरू २७ र ४१ मा उल्लिखित विशेष उपायहरू गर्न अधिकार प्रदान गरेकोमा बाहेक, संरक्षित व्यक्तिहरूको अवस्था सैद्धान्तिक रुपमा शान्तिको समयमा विदेशीहरू सम्बन्धी प्रावधानहरूद्वारा व्यवस्थित भइरहनेछ । सबै अवस्थाहरूमा तिनीहरूलाई निम्नलिखित अधिकारहरू प्रदान गरिनेछ :-

(१) उनीहरूलाई व्यक्तिगत वा सामूहिक रुपमा पठाउन सकिने राहत प्राप्त गर्न सकिने योग्य बनाइनेछ।

(२) यदि उनीहरूको स्वास्थ्यको अवस्था अनुसार आवश्यक भएमा उनीहरूले सम्बन्धित देशको नागरिकले पाएको सरहको चिकित्सा सम्बन्धी हेरचाह र अस्पताल सम्बन्धी उपचार प्राप्त गर्नेछन्।

(३) उनीहरूलाई आफ्नो धर्मको अभ्यास गर्न र उनीहरूको आस्थाका पूजारीहरूद्वारा आध्यात्मिक सहायता लिन अनुमति दिइनेछ।

(४) यदि विशेष रुपले युद्धको खतरा भएको क्षेत्रमा उनीहरू बस्छन् भने उनीहरूलाई सम्बन्धित देशका नागरिकहरू सरह, सो ठाउँबाट सर्ने अधिकार प्राप्त हुनेछ।

(५) पन्ध्र वर्ष मुनिका बालबालिका, गर्भवती महिलाहरू र सात वर्षभन्दा कम उमेरका बालबालिकाकी आमाहरूले, सम्बन्धित देशका नागरिकहरू सरह कुनै पनि सुविधाप्रद व्यवहारबाट फाइदा पाउनेछन् ।

## धारा ३९

युद्धको परिणामस्वरुप लाभपूर्ण रोजगारी गुमाएका संरक्षित व्यक्तिहरूलाई पारिश्रमिक सहितको रोजगार प्राप्त गर्ने अवसर प्रदान गरिनेछ । सुरक्षाका आवश्यकताहरू र धारा ४० का प्रावधानहरूको अधीन रही यो अवसर उनीहरू जुन भू-भागमा छन् त्यो शक्तिका नागरिकहरूले उपभोग गरेसरह हुनेछ ।

जहाँ संघर्षको कुनै पक्षले संरक्षित व्यक्तिमाथि नियन्त्रणको तरीका प्रयोग गर्छ जसको परिणामस्वरुप ऊ आफूलाई भरण पोषण गर्न अक्षम हुन्छ र खास गरी यदि यस्तो व्यक्तिमाथि सुरक्षाका कारणहरूबाट समुचित शर्तहरूमा पारिश्रमिक सहितको रोजगारी पाउन रोक लगाइन्छ भने त्यो पक्षले उसको र उसका आश्रितहरूको भरण पोषणबारे सुनिश्चित गर्नेछ ।

संरक्षित व्यक्तिहरूले कुनै पनि अवस्थामा उनीहरूको गृह राष्ट्र, संरक्षक शक्ति वा धारा ३० मा उल्लिखित सहायता गर्ने संस्थाहरूबाट मात्र भत्ताहरू प्राप्त गर्न सक्छन् ।

## धारा ४०

संरक्षित व्यक्तिहरूलाई उनीहरू रहेको, संघर्षरत पक्षको भू-भागका नागरिकहरू सरहमात्र काम गर्न बाध्य पार्न सकिन्छ ।

यदि संरक्षित व्यक्तिहरू शत्रु राष्ट्रियताका रहेछन् भने उनीहरूलाई प्रत्यक्ष रुपमा सैनिक कारबाहीसँग सम्बन्धित नभएको त्यस्तो काम मात्र गर्न बाध्य पार्न सकिन्छ जुन मानवको खाना, आवास, कपडा, यातायात र स्वास्थ्यको लागि सामान्यतया आवश्यक हुन्छ ।

यस अघिका दुई अनुच्छेदहरूमा उल्लिखित अवस्थाहरूमा काम गर्न बाध्य पारिएका संरक्षित व्यक्तिहरूले विशेष रुपले ज्याला, श्रम गर्ने घण्टा, लत्ताकपडा र सरसामान, पूर्व तालिम, पेशागत दुर्घटना र रोगबापत क्षतिपूर्ति राष्ट्रिय कामदारहरू सरह समान काम गर्ने अवस्थाहरू र समान सुरक्षाको फाइदा पाउनेछन् ।

यदि माथिका प्रावधानहरू उल्लंघन भएमा संरक्षित व्यक्तिहरूलाई धारा ३० अनुसारको उजुरी गर्ने अधिकारको प्रयोग गर्न अनुमति प्रदान गरिनेछ ।

## धारा ४१

संरक्षित व्यक्तिहरू जसको हातमा रहेका छन् यदि त्यो शक्तिको विचारमा प्रस्तुत महासन्धिमा उल्लिखित नियन्त्रणका उपायहरू अपर्याप्त भए भने उसले धाराहरू ४२ र ४३ को प्रावधान अनुसार नजरबन्द वा निर्दिष्ट निवासभन्दा कठोर नियन्त्रणका अन्य उपायहरू अवलम्बन गर्न सक्नेछैन ।

कुनै फैसला बमोजिम अन्यत्र कहींको तोकिएको निवासमा बस्नुपर्ने प्रयोजनका लागि उनीहरू बसी आएको स्थान छोड्न पर्ने मानिसहरूको हकमा धारा ३९ को दोस्रो अनुच्छेदका प्रावधानहरू लागू गर्दा कब्जा गर्ने शक्ति प्रस्तुत महासन्धिको भाग तीन, खण्ड चारमा भएका कल्याणकारी मानक (स्तर) हरूबाट जतिसक्दो सूक्ष्म तरिकाले निर्देशित हुनेछ ।

## धारा ४२

संरक्षित व्यक्तिलाई नजरबन्द वा तोकिएको निवासमा राख्ने आदेश कब्जा गर्ने शक्तिको सुरक्षाको निम्ति पूर्ण रुपमा आवश्यक छ भने मात्र दिन सकिनेछ ।

यदि संरक्षक शक्तिको प्रतिनिधि मार्फत कुनै व्यक्तिले स्वेच्छिक रुपमा नजरबन्दको माग गर्छ र यदि उसको अवस्थाले यस्तो कदम चाल्न आवश्यक मानिन्छ भने ऊ जुन शक्तिको हातमा छ त्यही शक्तिद्वारा नजरबन्दमा राखिनेछ ।

## धारा ४३

नजरबन्द वा निर्दिष्ट निवासमा राखिएको कुनै संरक्षित व्यक्तिलाई यसबारे उपयुक्त अदालतबाट वा कब्जा गर्ने शक्तिले सो प्रयोजनको लागि तोकेको विशिष्ट प्रशासकीय समितिबाट जतिसक्दो चाँडो पुनर्विचार गराउन पाउने अधिकार हुनेछ । यदि नजरबन्द वा निर्दिष्ट निवासमा राखिएको अवस्था कायम रहिरहने छ भने त्यो अदालत वा प्रशासकीय परिषदले आवधिक रुपले, परिस्थितिले साथ दिएसम्म कम्तिमा वर्षको दुई पटक, प्रारम्भिक फैसलालाई, अनुकूल संशोधन गर्ने उद्देश्यले उसको वा उनीहरूको मुद्दालाई विचार गर्नेछ ।

सम्बन्धित संरक्षित व्यक्तिले विरोध नगरेसम्म कब्जा गर्ने शक्तिले यथाशिघ्र नजरबन्दमा राखिएका अथवा निर्दिष्ट निवासमा राखिएका अथवा जो नजरबन्द वा निर्दिष्ट निवासबाट रिहा गरिएका छन्, उनीहरूका नामहरू संरक्षक शक्तिलाई दिइनेछ । यस धाराको पहिलो अनुच्छेदमा उल्लेख गरिएको अदालत वा समितिको फैसलाबारे पनि तिनै शर्तहरूको अधीनमा रही यथाशिघ्र संरक्षक शक्तिलाई सूचित गरिनेछ ।

## धारा ४४

प्रस्तुत महासन्धिमा उल्लिखित नियन्त्रणका उपायहरू लागू गर्दा कब्जा गर्ने शक्तिले, शरणार्थीहरूलाई, जसलाई वास्तविकरुपमा कुनै पनि सरकारको संरक्षण प्राप्त छैन, कानुनत शत्रुराष्ट्रको नागरिकता भएकै आधारमा पूर्णतया विदेशी शत्रुको रुपमा व्यवहार गरिनेछैन ।

## धारा ४५

संरक्षित व्यक्तिहरूलाई महासन्धिको पक्ष नभएको शक्तिराष्ट्रलाई हस्तान्तरित गरिनेछैन ।

यो प्रावधानले लडाईं समाप्त भएपछि संरक्षित व्यक्तिहरूको स्वदेश फिर्ती अथवा तिनीहरूको बसोबास भएको देश फर्कनको लागि, कुनै पनि रुपमा अवरोध पुऱ्याउने छैन ।

कब्जा गर्ने शक्तिले संरक्षित व्यक्तिहरूलाई प्रस्तुत महासन्धिको पक्ष भएको शक्तिलाई मात्र निजको प्रस्तुत महासन्धि लागू गर्ने चाहना र योग्यताको बारेमा सन्तुष्ट भए पछि हस्तान्तरण गर्नेछ । यदि यस्तो अवस्थामा संरक्षित व्यक्तिहरूको हस्तान्तरण भएमा उनीहरू हिरासतमा रहँदा वर्तमान महासन्धि लागू गर्ने उत्तरदायित्व उनीहरूलाई स्वीकार गर्ने शक्तिमाथि रहनेछ । तथापि यदि कुनै महत्वपूर्ण सवालमा त्यो शक्तिले वर्तमान महासन्धिका प्रावधानहरूलाई पूरा गर्न असफल हुन्छ भने त्यो शक्तिले जसले संरक्षित व्यक्तिहरूलाई हस्तान्तरण गरेको थियो संरक्षक शक्तिद्वारा सोबारे जानकारी पाएमा त्यस्तो अवस्थालाई सच्याउन प्रभावकारी उपाय गर्न सक्छ अथवा संरक्षित व्यक्तिहरूको फिर्ताको लागि अनुरोध गर्न सक्छ । यस्तो अनुरोधको पालना गर्नैपर्छ ।

संरक्षित व्यक्तिलाई कुनै पनि अवस्थामा त्यस्तो देशमा हस्तान्तरण गरिनेछैन जहाँ उसलाई उसको राजनीतिक विचार वा धार्मिक विश्वासको आधारमा उत्पीडन सहनुपर्ने डरको सम्भावना हुन सक्छ ।

यो धाराका प्रावधानहरूले साधारण फौजदारी कानुन विरुद्ध कसुरको दोष लागेका संरक्षित व्यक्तिहरूलाई लडाइँ प्रारम्भ हुन भन्दा पहिले सम्पन्न सुपुर्दगी सन्धिका अनुरुप सुपुर्दगी गर्न अवरोध पुऱ्याउने छैन ।

## धारा ४६

पहिले फिर्ता नलिएको भए संरक्षित व्यक्तिहरूको हकमा गरिएका बंदेजात्मक उपायहरू लडाइँ बन्द भएपछि यथाशिघ्र खारेज गरिनेछ ।

तिनीहरूको सम्पत्तिलाई प्रभावित गर्ने प्रतिबन्धात्मक उपायहरूलाई बन्दी बनाउने शक्तिको कानुन अनुसार लडाईा बन्द भए पछि यथाशिघ्र खारेज गरिनेछ ।

## खण्ड ३

## कब्जा गरिएका भू-भागहरू

### धारा ४७

कब्जा गरिएको क्षेत्रमा भएका संरक्षित व्यक्तिहरूलाई उल्लिखित भू-भाग कब्जा गरिएको कारणले, सो भू-भागको सरकार वा संस्थाहरूमा भएको कुनै परिवर्तनबाट कुनै पनि अवस्था वा तरीकाले वर्तमान महासन्धिमा उल्लिखित फाइदाहरूबाट बञ्चित गरिने छैन, त्यस्तै कब्जा गरिएको भू-भागका पदाधिकारीहरू र कब्जा गर्ने शक्तिबीच भएको कुनै सम्झौताद्वारा, कब्जा गरिएको भू-भागको पूर्ण वा आंशिक भागलाई पछिल्लो (कब्जा गर्ने) शक्तिले आफ्नो क्षेत्रमा गाभेको कारणबाट बञ्चित गर्न सकिनेछैन ।

### धारा ४८

कब्जा गरिएको भू-भागको राष्ट्रका नागरिक नभएका संरक्षित व्यक्तिहरू धारा ३५ को प्रावधानको अधीनमा त्यो भू-भाग छोड्ने अधिकार प्रयोग गर्न सक्छन् र त्यस सम्बन्धी फैसला कब्जा गर्ने शक्तिले उक्त धारामा निर्धारित कार्यविधि अनुसार हुनेछ ।

### धारा ४९

संरक्षित व्यक्तिहरूलाई, कब्जा गरिएको भू-भागबाट कब्जा गर्ने शक्तिको वा कब्जा गरिएको वा नागरिएको अन्य कुनै राष्ट्रको भू-भागमा जुनसुकै मनसायले गरेको भए पनि व्यक्तिगत वा समूहगत रुपमा स्थानान्तरण वा देश निकाला निषेध गरिएको छ ।

तथापि जनसंख्याको सुरक्षा अथवा अत्यावश्यक सैनिक कारणले आवश्यक भएमा कब्जा गर्ने शक्तिले, आंशिक वा पूर्ण रुपमा कुनै निर्दिष्ट भाग खाली गराउन सक्छ । भौतिक कारणले यस्तो स्थान परिवर्तनलाई टार्न सम्भव भएमा बाहेक, यस्तो स्थान परिवर्तनमा, संरक्षित व्यक्तिहरूलाई कब्जा गरिएको भू-भागको सीमाना भन्दा बाहिर पठाउने कामलाई समावेश गरिने छैन । यसरी अन्यत्र सारिएका व्यक्तिहरूलाई उल्लिखित क्षेत्रमा लडाइँ अन्त्य हुनासाथ उनीहरूको आफ्ना घरमा फर्काइनेछ ।

कब्जा गर्ने शक्तिले यस्ता स्थानान्तरण अथवा अन्यत्र सार्ने कार्य गर्दा व्यवहारिकरुपमा सम्भव भएसम्म, संरक्षित व्यक्तिहरूलाई उचित बासस्थान, स्वास्थ्य, सुरक्षा र पोषणको सन्तोषजनक अवस्था रहेको व्यवस्था र हटाइएका एउटै परिवारका सदस्यहरूलाई अलग गरिने छैन भन्नेबारे सुनिश्चित गर्नेछ ।

कुनै पनि स्थानान्तरण वा खाली गराउने कार्य हुनासाथ, सो को जानकारी संरक्षक शक्तिलाई दिइनेछ ।

जनसंख्याको सुरक्षा र अत्यावश्यक सैनिक कारणले आवश्यक नभएसम्म संरक्षक शक्तिले संरक्षित व्यक्तिहरूलाई खास गरी त्यस्तो खतरा उन्मुख ठाउँमा थुन्ने छैन ।

कब्जा गर्ने शक्तिले आफ्नो असैनिक जनसंख्याको केही भागलाई आफूले ओगटेको भू-भागमा स्थानान्तरण गर्ने वा देश निकाला गर्नेछैन ।

## धारा ५०

कब्जा गर्ने शक्तिले राष्ट्रिय र स्थानीय अधिकारीहरूको सहयोगमा बालबालिकाको शिक्षा र सम्भारमा समर्पित सबै संस्थाहरूको समुचित संचालनलाई सहज गर्नेछ ।

कब्जा गर्ने शक्तिको बालबालिकाको पहिचान र उनीहरूका आमाबाबुको नाम दर्ता गर्न आवश्यक पर्ने सबै कदमहरू चाल्नेछ । यसले कुनै पनि अवस्थामा उनीहरूको व्यक्तिगत हैसियतमा परिवर्तन गर्नेछैन, न त तिनीहरूलाई यसका अधीनस्त संगठन वा अंगहरूको मातहतमा राख्नेछ ।

यदि यो उद्देश्यका लागि स्थानीय संस्थाहरू अपर्याप्त भएमा कब्जा गर्ने शक्तिले युद्धको कारणले टुहुरा भएका वा पारिवारिक छुट्टिएका र नजिकको नातेदार वा मित्रबाट पर्याप्त हेरचाह प्राप्त गर्न नसक्ने बच्चाहरूको निर्वाह र शिक्षा, सम्भव भए उनीहरूको आफ्नै राष्ट्रियता, भाषा र धर्म भएका व्यक्तिहरूबाट दिलाउने प्रबन्ध मिलाउनेछ ।

धारा १३६ बमोजिम स्थापित विभागको विशेष शाखा, पहिचान, शंकास्पद भएका सबै बालबालिकाको पहिचान गर्न उत्तरदायी हुनेछ । यदि उपलब्ध भएमा उनीहरूका आमाबाबु अथवा नजिकका अन्य नातेदारहरूको विवरणको जहिले पनि अभिलेख राख्नुपर्छ ।

युद्धको परिणामको विरुद्ध पन्ध्र वर्षभन्दा मुनिका बालबालिका, गर्भवती महिला र सात वर्षभन्दा मुनिका बालबालिकाकी आमाको पक्षमा कब्जा हुनुभन्दा अगावै अपनाइएको कुनै पनि सौविध्यपूर्ण उपायहरू लागू गर्ने कार्यलाई कब्जा गर्ने शक्तिले बाधा पुऱ्याउने छैन ।

## धारा ५१

कब्जा गर्ने शक्तिले संरक्षित व्यक्तिहरूलाई यसको सशस्त्र वा सहायक फौजमा काम गर्न बाध्य पार्न सक्नेछैन । स्वेच्छिक भर्ती गर्ने उद्देश्यले गरिने कुनै पनि दबाब वा प्रचारबाजीलाई निषेध गरिएको छ ।

संरक्षित व्यक्ति १८ वर्षको नभएसम्म कब्जा गर्ने शक्तिले तिनीहरूलाई काममा लगाउन दबाब दिन सक्नेछैन र त्यसरी काममा लगाउँदा पनि कब्जा गर्ने सेनालाई आवश्यक पर्ने वा सार्वजनिक सेवाहरूका लागि वा कब्जा गरिएको देशको जनताको भोजन, आवास, कपडा, यातायात वा स्वास्थ्यलाई आवश्यक पर्ने काममा मात्र लगाइनेछ । संरक्षित व्यक्तिहरूलाई त्यस्तो कुनै पनि काममा भाग लिन बाध्य पार्न सकिने छैनन् जसले तिनीहरूलाई सैनिक कारबाहीमा भाग लिनुपर्ने दायित्वमा संलग्न गराउनेछ । कब्जा गर्ने शक्तिले संरक्षित व्यक्तिहरूलाई उनीहरूले अनिवार्य सेवा गरी रहेको ठाउँका संरचनाहरूको सुरक्षा सुनिश्चित गर्नको लागि दबाबमूलक उपायहरुको प्रयोग गर्न बाध्य पार्न सक्नेछैन ।

कब्जा गरिएको ठाउँमा सेवाका लागि बोलाइएका व्यक्तिहरूले सोही ठाउँमा मात्र काम गर्नेछन् । त्यस्तो प्रत्येक व्यक्तिलाई सम्भव भएसम्म उसको रोजगारीको नियमित स्थानमा राखिनेछ । कामदारहरूलाई उचित ज्याला दिइनेछ र त्यो काम उनीहरूको बौद्धिक तथा शारीरिक क्षमतासँग सुहाउँदो हुनेछ । खासगरी ज्यालामा काम गर्ने घण्टा, उपकरण, प्राथमिक तालिम र पेशागत दुर्घटना र बिरामी बापत क्षतिपूर्ति सम्बन्धी सुरक्षा र काम गर्ने अवस्थाहरूबारे कब्जा गरिएको देशमा प्रचलित कानुन यस धारामा उल्लेख गरिएको काम गर्न खटाइएका संरक्षित व्यक्तिहरूको हकमा लागू हुनेछ ।

कुनै पनि हालतमा श्रमको मागले सैनिक वा अर्धसैनिक चरित्रको कुनै संगठनमा कामदारहरूको परिचालनलाई निम्त्याउने छैन ।

## धारा ५२

कुनै पनि करार, सम्झौता वा नियमले, स्वेच्छिक होस् वा नहोस् र ऊ जहाँसुकै भए पनि, संरक्षक शक्तिका प्रतिनिधिहरू समक्ष उक्त शक्तिको हस्तक्षेपको अनुरोध गर्दै आवेदन गर्ने कुनै पनि कामदारको अधिकारलाई कुण्ठित गर्नेछैन ।

कब्जा गरिएको भू-भागमा काम गर्ने कामदारहरूलाई कब्जा गर्ने शक्तिको लागि काम गर्न उत्प्रेरित गर्ने उद्देश्यले बेरोजगारी सृजना गर्ने वा अवसरलाई संकुचन गर्ने सबै उपायहरू निषेध गरिन्छ ।

## धारा ५३

सैनिक कारबाहीद्वारा नष्ट गर्न अति आवश्यक भएकोमा बाहेक कब्जा गर्ने शक्तिले व्यक्तिगत रुपमा वा सामूहिक रुपमा निजी व्यक्तिहरूसँग सम्बन्धित वा राज्य वा अरु सरकारी अधिकारीहरू

वा सामाजिक वा सहकारी संस्थाहरूसँग सम्बन्धित अचल सम्पत्ति वा निजी सम्पत्तिलाई नष्ट पार्ने कार्य निषेधित छ।

## धारा ५४

यदि कब्जा गरिएको भू-भागमा भएका सरकारी अधिकारीहरू वा न्यायाधीशहरूले आफ्नो सद्विवेकको कारणले आफ्नो कार्य पूरा गर्नबाट अलग रहन्छन् भने कब्जा गर्ने शक्तिले उनीहरूको हैसियतमा परिवर्तन गर्न सक्नेछैन, न त कुनै तरिकाले कानुनी बन्देज लगाउनेछ, न तिनीहरूका विरुद्ध बल प्रयोग वा भेदभाव गर्नेछ।

यो निषेध, धारा ५१ को दोस्रो अनुच्छेद लागू गर्न प्रतिकूल हुने छैन । यसले सरकारी अधिकारीहरूलाई उनीहरूको पदबाट हटाउने कब्जा गर्ने शक्तिको अधिकारलाई असर गर्दैन ।

## धारा ५५

आफूलाई उपलब्ध भएका साधनहरूको पूर्ण हदसम्म, जनताहरुका लागि खाना र औषधीको आपूर्ति सुनिश्चित गर्नु कब्जा गर्ने शक्तिको कर्तव्य हुन्छ, यदि कब्जा गरिएको भू-भागको स्रोत अपर्याप्त भएमा, यसले खास गरी आवश्यक खाद्यान्न, औषधि भण्डार र अरु सामानहरू ल्याउनुपर्छ।

कब्जा गर्ने शक्तिले उसको सेना र प्रशासनिक कर्मचारीको प्रयोगका लागि बाहेक र त्यसमा पनि गैरसैनिक जनसंख्याको आवश्यकताबारे ध्यान नपुऱ्याएसम्म कब्जा गर्ने शक्तिले कब्जा गरिएको क्षेत्रमा उपलब्ध खाद्यान्न, सरसामान र औषधी आपूर्तिको लागि आधिकारिक माग गर्न सक्नेछैन । अन्य अन्तर्राष्ट्रिय महासन्धिहरूका प्रावधानहरूको अधीन रही कब्जा गर्ने शक्तिले कुनै पनि आधिकारिक माग गरिएको वस्तुको उचित मूल्य तिरिएको छ भन्ने कुरा सुनिश्चित गर्न आवश्यक व्यवस्था गर्नेछ।

अत्यावश्यक सैनिक आवश्यकताहरूद्वारा अस्थायी बन्देजहरू लगाउन आवश्यक भएमा बाहेक, संरक्षक शक्तिलाई कुनै पनि समय कब्जा गरिएको भू-भागमा खाद्यवस्तु र औषधि आपूर्तिको स्थितिबारे सत्यता बुझ्न स्वतन्त्रता रहनेछ।

## धारा ५६

आफूलाई उपलब्ध भएका साधनहरूको पूर्ण हदसम्म, राष्ट्रिय र स्थानीय अधिकारीहरूको सहयोगमा कब्जा गरिएको क्षेत्रमा चिकित्सा र अस्पताल सम्बन्धी संस्थानहरू र सेवाहरू सार्वजनिक स्वास्थ्य र सरसफाईको सुनिश्चित गर्नुपर्ने र बनाई राख्नुपर्ने कर्तव्य कब्जा गर्ने

शक्तिको हुनेछ । साथै खास गरेर संक्रामक रोग र महामारीको फैलावट विरुद्ध लडाइँ गर्न आवश्यक पर्ने रोग निरोधक र निवारक उपायहरू अपनाउने र लागू गर्ने पनि सो शक्तिको कर्तव्य हुनेछ। सबै श्रेणीका स्वास्थ्य कर्मचारीहरूलाई उनीहरूको कर्तव्य निर्वाह गर्न अनुमति दिइनेछ।

यदि कब्जा गरिएको क्षेत्रमा नयाँ अस्पताल स्थापना गरियो भने र यदि कब्जा गरिएको राज्यका सक्षम अंगहरू त्यहाँ संचालन भइरहेका छैनन भने कब्जा गर्ने अधिकारीहरूले, आवश्यक भएमा, तिनीहरूलाई धारा १८ मा उल्लिखित मान्यता प्रदान गर्नेछन् । उस्तै परिस्थितिहरूमा कब्जा गर्ने अधिकारीहरूले धाराहरू २० र २१ का प्रावधान अन्तर्गत, अस्पतालका कर्मचारीहरू र यातायातका सवारी साधनहरूलाई पनि मान्यता प्रदान गर्नेछन् ।

कब्जा गर्ने शक्तिले स्वास्थ्य र सरसफाइका उपायहरू अवलम्बन र कार्यान्वयन गर्दा, कब्जा गरिएको भू-भागको जनसंख्याको आचरण र नैतिक भावनालाई पनि ध्यानमा राख्नेछ।

## धारा ५७

कब्जा गर्ने शक्तिले अस्थायी रुपमा बिरामी र घाइते सैनिकहरूको उपचारको लागि अति आवश्यक पर्दा मात्र गैरसैनिक अस्पतालहरूको आधिकारिक अधिग्रहण गर्नेछ र यस्तो अवस्थामा अन्य बिरामीको उपचार र हेरचाह र असैनिक नागरिकको उपचारको लागि समयमै अस्पतालको उपयुक्त व्यवस्था मिलाइएको हुनुपर्नेछ।

गैरसैनिक अस्पतालको सरसामान र भण्डार, गैरसैनिक जनसंख्याको लागि आवश्यक परेसम्म आधिकारिक रुपमा माग गर्न सकिनेछैन ।

## धारा ५८

कब्जा गर्ने शक्तिले धार्मिक पूजारीहरूलाई उनीहरूको धार्मिक समुदायका सदस्यहरूलाई आध्यात्मिक सहयोग गर्न अनुमति दिनेछ।

कब्जा गर्ने शक्तिले धार्मिक आवश्यकताहरूलाई चाहिने पुस्तक र वस्तुहरू भएको खेपलाई पनि स्वीकार गर्नेछ र कब्जा गरिएको क्षेत्रमा यसको वितरणलाई सहज बनाउनेछ।

## धारा ५९

यदि एउटा कब्जा गरिएको भू-भागको पूर्ण वा आंशिक जनसंख्यालाई अपर्याप्तरुपमा आपूर्ति गरिएको रहेछ भने त्यो कब्जा गर्ने शक्तिले उक्त जनसंख्याको निम्ति हुने सहायता कार्यक्रममा सहमति जनाउनेछ र आफ्नो अधीनमा रहेका सबै साधनहरूद्वारा तिनीहरूलाई सघाउन सुविधा पुऱ्याउनेछ।

राज्यहरूद्वारा वा रेडक्रसको अन्तर्राष्ट्रिय समिति जस्ता निष्पक्ष मानवतावादी संगठनहरूद्वारा प्रारम्भ गर्न सकिने यस्ता योजनाहरूले खास गरी खाद्यान्न, औषधीको पूर्ति र कपडाको खेपलाई समावेश गर्नेछ ।

सबै संविदाकारी पक्षहरूले यी सामग्रीहरूको खेपको स्वतन्त्र आवत-जावतलाई अनुमति दिनेछन् र तिनको रक्षाको प्रत्याभूति दिनेछन् ।

तथापि संघर्षरत विपक्षीद्वारा कब्जा गरिएको भूभागमा ढुवानी सामग्रीको खेप लैजान अनुमति दिने शक्तिलाई उक्त खेपलाई तलाशी लिन, तोकिएको समय र मार्ग अनुसार तिनीहरूको आवतजावतलाई नियमित गर्न र ती ढुवानी गरिएका सामग्रीहरू जरुरतमन्द जनसंख्याको कल्याणको लागि प्रयोग गरिनेछ र कब्जा गर्ने शक्तिको फाइदाको लागि प्रयोग गरिने छैन भन्ने बारे संरक्षक शक्ति मार्फत समुचित रुपमा सन्तुष्ट हुनुपर्ने अधिकार हुनेछ ।

## धारा ६०

राहत सामग्रीका खेपहरूले कब्जा गर्ने शक्तिलाई धाराहरू ५५, ५६ र ५९ अन्तरगतको उत्तरदायित्वबाट कुनै पनि हालतमा मुक्त गर्नेछैन । अति आवश्यक परेमा र कब्जा गरिएको भू-भागको जनसंख्याको हितमा संरक्षक शक्तिको सहमतिमा बाहेक कब्जा गर्ने शक्तिले कुनै पनि हालतमा राहतका सामग्रीहरूलाई अन्यत्र पठाउने छैन ।

## धारा ६१

यस अघिका धाराहरूमा उल्लेख गरिएका राहतका सामग्रीहरूको वितरण, संरक्षक शक्तिको सहयोग र रेखदेखमा पूरा गरिनेछ । यो काम कब्जा गर्ने शक्ति र संरक्षक शक्ति बीच हुने सम्झौताद्वारा, रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा अरु कुनै निष्पक्ष मानवतावादी निकाय तथा कुनै तटस्थ शक्तिलाई प्रत्यायोजन पनि गर्न सकिनेछ ।

कब्जा गरिएको क्षेत्रमा यस्ता सहायताका सामग्रीहरू त्यो भू-भागको अर्थन्त्रको हितमा आवश्यक परेमा बाहेक, सबै किसिमका दस्तुरहरू, करहरू र भन्सार महसुलहरूबाट मुक्त हुने छन् । कब्जा गर्ने शक्तिले यी सामग्रीहरूको द्रुत वितरणलाई सहज बनाउनेछ ।

सबै संविदाकारी पक्षहरू यस्ता राहत सामग्रीहरूको कब्जा गरिएको क्षेत्रसम्म, कुनै दस्तुर विना पारवहन र परिवहनको लागि अनुमति दिने प्रयत्न गर्नेछन् ।

## धारा ६२

आवश्यक सुरक्षा कारणहरूको अधीन रही कब्जा गरिएको भू-भागमा रहेका संरक्षित व्यक्तिहरूलाई पठाइएका, व्यक्तिगत राहत सामग्रीहरू प्राप्त गर्न अनुमति दिइनेछ ।

## धारा ६३

कब्जा गर्ने शक्तिले अत्यन्त जरुरी सुरक्षा कारणहरूका लागि लगाएको अस्थायी र असाधारण उपायहरूको अधीनमा रही :-

(क) मान्यता प्राप्त रेडक्रस (रातो अर्धचन्द्र, रातो सिंह र सूर्य) सोसाइटीहरू अन्तर्राष्ट्रिय रेडक्रस सम्मेलनहरूद्वारा परिभाषित गरिएका रेडक्रस सिद्धान्तहरूका अनुसार उनीहरूका गतिविधिहरू अनुशरण गर्न समर्थ हुनेछन् । अन्य राहत कार्य गर्ने संस्थाहरूलाई पनि उस्तै अवस्थामा आफ्ना मानवीय क्रियाकलापहरूलाई निरन्तरता दिन अनुमति दिइनेछ ।

(ख) कब्जा गर्ने शक्तिलाई माथि उल्लिखित काम काजमा प्रतिकूल असर पर्ने गरी संस्थाका कर्मचारीहरू वा ढाँचामा कुनै परिवर्तन ल्याउन आवश्यक नपर्न सक्छ ।

अत्यावश्यक सार्वजनिक उपयोगका सेवाहरूको सम्भार गरेर, राहतका वस्तुहरू वितरण गरेर र उद्धारको आयोजना गरेर गैरसैनिक जनसंख्याको जीवनको अवस्था सुनिश्चित गर्ने प्रयोजनको लागि स्थापित वा स्थापना हुने गैरसैनिक चरित्रका विशेष संगठनहरूका गतिविधि र कर्मचारीहरूलाई पनि यही सिद्धान्तहरू लागू हुनेछन् ।

## धारा ६४

कब्जा गरिएका भू-भागका दण्डसम्बन्धी कानुनहरू लागू भइरहने छन् । तर कब्जा गर्ने शक्तिको सुरक्षाको लागि खतरा उत्पन्न गरेमा वा प्रस्तुत महासन्धि लागू गर्ने कार्यमा बाधा पुऱ्याएमा, यस्तो स्थितिमा कब्जा गर्ने शक्तिले निलम्बन वा खारेज गर्न सक्नेछ ।

पछिल्लो प्रावधानहरुको अधीन र न्यायको प्रभावकारी कार्यान्वयन सुनिश्चित गर्ने आवश्यकताका लागि उक्त कानुनहरूले समेटेका सबै कसुरहरूको सन्दर्भमा कब्जा गरिएका भू-भागका अदालतहरू, क्रियाशील रहिरहनेछन् ।

तर, कब्जा गर्ने शक्तिले प्रस्तुत महासन्धि अन्तरगतका कर्तव्यहरू पूरा गर्न निजहरूलाई समर्थ बनाउनका लागि, त्यो भू-भागमा व्यवस्थित सरकार बनाई राख्नको लागि, कब्जा गर्ने शक्तिको, यसका सदस्यहरू र यसको सम्पत्ति र प्रशासनको सुरक्षाको लागि, साथै उनीहरूले प्रयोग गरेका

प्रतिष्ठानहरू र संचारका माध्यमहरूको रक्षाका लागि आवश्यक पर्ने प्रावधानहरू कब्जा गरिएको भू-भागको आवादी माथि लागू गर्न सक्नेछ।

## धारा ६५

कब्जा गर्ने शक्तिले बनाएका दण्डका प्रावधानहरू प्रकाशित नभएसम्म र उनीहरूकै भाषामा बासिन्दाहरूको जानकारीमा नल्याएसम्म लागू हुनेछैनन् । यस्ता दण्डका प्रावधानहरूको असर पूर्वप्रभावी हुनेछैन ।

## धारा ६६

धारा ६४ को दोस्रो अनुच्छेदको कारणबाट यसले घोषणा गरेको दण्डात्मक प्रावधानहरूको उल्लंघन भएको अवस्थामा, कब्जा गर्ने शक्तिले अभियुक्तहरूलाई त्यस्ता अदालतहरु कब्जा गरिएको मुलुकमा बस्छन् भन्ने शर्तमा, समुचित रुपमा गठित अराजनीतिक सैनिक अदालतहरूलाई सुम्पन सक्नेछ । पुनरावेदन अदालतहरू छान्न सम्भव भएसम्म कब्जा गरिएको देशमा बस्नेछन् ।

## धारा ६७

अदालतहरूले  कानुनका त्यस्ता प्रावधानहरू मात्र लागू गर्छन् जुन कसुर हुनुभन्दा पहिले लागू थिए र जुन कानुनका सामान्य सिद्धान्त, खासगरी कसुरको मात्राको अनुपातमा दण्ड दिनुपर्ने भन्ने सिद्धान्तहरू, अनुरुप हुनुपर्नेछ । उनीहरूले अभियुक्त, कब्जा गर्ने शक्तिको नागरिक होइन भन्ने कुरामा विचार पुऱ्याउने छन् ।

## धारा ६८

संरक्षित व्यक्तिहरू जसले कब्जा गर्ने शक्तिलाई हानी पुऱ्याउने एकमात्र उद्देश्यले कसुर गरेका हुन्छन् तर जसले कब्जा गर्ने सेना वा प्रशासनका सदस्यहरूको ज्यान वा अंगमा हानी पुऱ्याउने उद्योग गरेका हुँदैनन्, न त गम्भीर सामूहिक खतरा नै पुऱ्याउँछन्, न त कब्जा गर्ने शक्तिको सम्पत्ति वा प्रशासन वा तिनीहरूले प्रयोग गरेको संस्थापनहरूलाई गम्भीर क्षति नै पुऱ्याउँछन्, त्यस्ता व्यक्ति नजरबन्दी वा सामान्य कारावासका भागी हुनेछन् तर यस्तो नजरबन्द वा कारावासको अवधि गरिएको अपराधको अनुपातमा हुनु पर्नेछ । यस बाहेक यस्ता कसुरको लागि नजरबन्द वा कारावास, संरक्षित व्यक्तिलाई स्वतन्त्रताबाट बञ्चित गर्नको लागि अपनाइएको एक मात्र उपाय हुनेछ । प्रस्तुत महासन्धिको धारा ६६ अन्तरगत व्यवस्था गरिएका अदालतहरूले

उनीहरूको स्वविवेकले कारावासको सजायलाई त्यही अवधिको नजरबन्दको सजायमा परिवर्तन गर्न सक्छन् ।

यदि कब्जा गरिएको भू-भागमा कब्जा शुरु हुनुभन्दा पहिले त्यहाँको कानुन अनुसार त्यस्ता कसूरहरू मृत्युदण्डद्वारा दण्डनीय भएमा र संरक्षित व्यक्ति जासुसी, कब्जा गर्ने शक्तिको सैनिक संरचनाहरू विरुद्ध गम्भीर तोडफोडको कार्य अथवा एक वा एकभन्दा बढी व्यक्तिहरूको मृत्यु भएको मनसाययुक्त कार्यको दोषी भएमा मात्र धारा ६४ र ६५ अनुसार कब्जा गर्ने शक्तिले घोषणा गरेका दण्डका प्रावधानहरू अन्तरगत संरक्षित व्यक्तिहरूलाई मृत्युदण्डको सजाय गर्न सकिन्छ ।

अभियुक्त कब्जा गर्ने शक्तिको नागरिक होइन र ऊ त्यसप्रति कुनै पनि निष्ठा राख्नुपर्ने कर्तव्यबाट आबद्ध छैन भन्ने तथ्यप्रति विशेषरुपमा अदालतको ध्यानाकर्षण नगराएसम्म, कुनै संरक्षित व्यक्तिको विरुद्ध मृत्युदण्डको सजाय सुनाइने छैन ।

तर कसुर गर्दाको समयमा अठार वर्षभन्दा कम उमेर रहेको संरक्षित व्यक्तिको विरुद्धमा कुनै पनि हालतमा मृत्युदण्डको सजाय सुनाइने छैन ।

## धारा ६९

सबै मुद्दाहरूमा कुनै कसुरको अभियोग लागेको व्यक्ति पक्राउ परी मुद्दाको कारबाही वा सजायको प्रतिक्षा गरी थुनामा बसेको अवधि, निजलाई तोकिएको कारावासको अवधिबाट घटाइनेछ ।

## धारा ७०

युद्धका कानुनहरू र प्रथाहरू उल्लंघन गरेकोमा बाहेक कब्जा हुनुभन्दा अगावै वा त्यसमा अस्थायी व्यवधान भएको समयमा संरक्षित व्यक्तिहरूले प्रकट गरेका विचारहरूका लागि कब्जा गर्ने शक्तिद्वारा निजहरूलाई गिरफ्तार गरिने, अभियोजित गरिने र दोषी सावित गरिनेछैन ।

लडाइँ शुरु भइसकेपछि गरेको अपराध वा लडाइँ शुरु हुनुभन्दा अगावै गरिएको सामान्य कानुनअन्तर्गत पर्ने अपराधहरू, जो कब्जा गर्ने राष्ट्रको कानुनअनुसार शान्तिको समयमा सुपुर्दगी गर्न योग्य हुन्छ, त्यस्ता अपराधहरू गरेमा बाहेक लडाइँ शुरु हुनुभन्दा पहिले कब्जा गरिएको राष्ट्रमा शरण लिएका कब्जा गर्ने राष्ट्रका नागरिकहरूलाई गिरफ्तार, अभियोजित र दोषी सावित गरिनेछैन वा कब्जा गरिएको क्षेत्रबाट निकाला गरिने छैन ।

## धारा ७१

नियमित अदालती सुनुवाई नगरी, कब्जा गर्ने शक्तिका सक्षम अदालतहरूले कुनै पनि सजाय सुनाउने छैनन् ।

कब्जा गर्ने शक्तिले अभियोजन गरिएका व्यक्तिहरूले बुझ्ने भाषामा, लिखितरुपमा उनीहरू माथि लगाइएको आरोपको विवरण उनीहरूलाई तुरुन्तै जानकारी गराइनेछ र जतिसक्दो चाँडो अदालत समक्ष पेश गरिनेछ । कब्जा गर्ने शक्तिद्वारा मृत्युदण्ड वा दुई वर्ष वा सोभन्दा बढी कारावास हुने अभियोग लागेका संरक्षित व्यक्तिहरूका विरुद्ध शुरु गरिएको सबै कारबाहीको सम्बन्धमा संरक्षक शक्तिलाई सूचना दिइनेछ । यस्तो कारबाहीको अवस्थाको बारेमा कुनै पनि समयमा सूचना लिन यसलाई योग्य बनाइनेछ । यस बाहेक, कब्जा गर्ने शक्तिले संरक्षित व्यक्तिहरूको विरुद्धमा गरेको यो वा अन्य कुनै कारवाहीको सम्पूर्ण विवरण माग गर्दा संरक्षक शक्तिलाई उपलब्ध गराइनेछ ।

माथि दोस्रो अनुच्छेदमा व्यवस्था गरिएको सूचना, संरक्षक शक्तिलाई तुरुन्त पठाइनेछ र जुनसुकै अवस्थामा पनि पहिलो सुनुवाई हुने मिति भन्दा तीन हप्ता अगावै संरक्षक शक्ति कहाँ पुग्नेछ । अदालती प्रक्रिया शुरु हुँदा यो धाराका प्रावधानहरू पूर्ण रुपले पूरा भएको भनी प्रमाण प्रस्तुत नगरेसम्म सुनुवाई अघि बढ्ने छैन ।

सो सूचनामा निम्नलिखित विवरणहरू समावेश हुनेछन् :-

(क) अभियुक्तको विवरण

(ख) बसोबास गरेको वा थुनामा रहेको स्थान

(ग) आरोप वा आरोपहरुको विस्तृत विवरण (कुन दण्ड सम्बन्धी प्रावधान अन्तर्गत सो लगाइएको हो त्यसको उल्लेखन)

(घ) सो मुद्दा सुनुवाई गर्ने अदालतको स्तर वा हैसियत

(ङ) पहिलो सुनुवाई गरिने स्थान र मिति

## धारा ७२

आरोपित व्यक्तिहरूलाई आफ्नो प्रतिरक्षा गर्न आवश्यक पर्ने प्रमाण प्रस्तुत गर्ने र खास गरेर साक्षी बोलाउन सक्ने अधिकार हुनेछ। उनीहरूलाई आफूले रोजेको योग्य अधिवक्ता वा वकिलद्वारा सहयोग प्राप्त गर्ने अधिकार हुनेछ र सो अधिवक्ता वा वकिल उनीहरूलाई स्वतन्त्रतापूर्वक भेट्न र प्रतिरक्षाको तयारी गर्न आवश्यक पर्ने सुविधा उपभोग गर्न सक्षम हुनेछ।

अभियुक्तले छनोट गर्न नसकेमा संरक्षक शक्तिले उसलाई अधिवक्ता वा वकिल उपलब्ध गराउन सक्नेछ । जब अभियुक्तले गम्भीर आरोपको सामना गर्नुपर्ने हुन्छ र संरक्षक शक्ति काम गरिरहेको छैन भने अभियुक्तको सहमति अनुसार कब्जा गर्ने शक्तिले अधिवक्ता वा वकिल उपलब्ध गराउनेछ ।

आरोपित व्यक्तिहरुले यस्तो सहयोगको स्वतन्त्रतापूर्वक परित्याग नगरेसम्म प्रारम्भिक अनुसन्धानको क्रममा र अदालतमा सुनुवाईको क्रममा समेत बीजहरुलाई दोभाषेको सहयोग उपलब्ध गराइनेछ । उनीहरुलाई कुनै पनि समयमा सो दोभाषेप्रति आपत्ति प्रकट गर्न र उसको सट्टामा अर्को दोभाषे माग गर्न अधिकार हुनेछ ।

## धारा ७३

दोषी प्रमाणित भएको व्यक्तिलाई अदालतले लागू गर्ने कानुनले व्यवस्था गरेअनुसार पुनरावेदन गर्ने अधिकार हुनेछ । उसको पुनरावेदन वा निवेदन दिने अधिकार र उसले त्यो गर्न सक्ने हदम्यादबारे उसलाई पूर्णरुपमा सूचित गरिनेछ ।

प्रस्तुत खण्डमा व्यवस्थित दण्ड प्रक्रियाहरू लागू हुने हदसम्म पुनरावेदनहरूका लागि पनि लागू हुनेछन् । जहाँ अदालतले लागू गर्ने कानुनहरूमा पुनरावेदनको प्रावधान नभएको स्थितिमा कसुरदारलाई कब्जा गर्ने शक्तिको सक्षम अधिकारी समक्ष उक्त ठहर र सजायहरूको विरुद्धमा निवेदन दिने अधिकार हुनेछ ।

## धारा ७४

कब्जा गर्ने शक्तिको सुरक्षाको हितमा अपवादात्मक रुपमा बन्द इजलाशमा सुनवाई गर्नुपरेमा बाहेक, जसबारे संरक्षक शक्तिलाई त्यसपछि जानकारी गराइन्छ, संरक्षक शक्तिका प्रतिनिधिहरूलाई कुनै संरक्षित व्यक्तिको अदालती सुनवाई प्रक्रियामा उपस्थित हुने अधिकार हुनेछ । अदालती सुनवाइको मिति र स्थान सम्बन्धी सूचना संरक्षक शक्तिलाई पठाइनेछ ।

मृत्युदण्ड अथवा दुई वर्ष वा सोभन्दा बढीको काराबासको सजाय सम्बन्धी कुनै निर्णय, संरक्षक शक्तिलाई सान्दर्भिक आधारहरू सहित जतिसक्दो चाँडो सूचित गरिनेछ । सो सूचनामा धारा ७१ अन्तरगत जारी सूचनाको पनि हवाला दिइनेछ र काराबास सजायको अवस्थामा सो सजाय भोग्नु पर्ने ठाउँको नाम पनि समावेश गरिनेछ । माथि उल्लेख गरिएदेखि बाहेकका अन्य फैसलाहरूको अभिलेख राखिनेछ र संरक्षक शक्तिका प्रतिनिधिहरूद्वारा निरीक्षणको लागि खुल्ला गरिनेछ । मृत्युदण्ड वा दुई वर्ष वा सोभन्दा बढीको काराबासको सजायका मुद्दाहरूमा पुनरावेदनको लागि अनुमति दिइएको अवधि, संरक्षक शक्तिले सो फैसलाको सूचना नपाएसम्म प्रारम्भ हुनेछैन ।

## धारा ७५

कुनै पनि मुद्दामा मृत्युदण्डको सजाय पाएको कुनै व्यक्तिलाई दण्डस्थगन वा क्षमा पाउनको लागि निवेदन दिने अधिकारबाट बञ्चित गरिनेछैन ।

मृत्युदण्डको अन्तिम फैसलालाई सदर गरिएको अथवा दण्डस्थगन वा क्षमा दिन इन्कार गर्ने आदेश दिएको सूचना, संरक्षक शक्तिले पाएको ६ महिना भुक्तान नभई कुनै पनि मृत्युदण्डको सजाय कार्यान्वयन गरिनेछैन ।

यहाँ निर्धारित मृत्युदण्डको सजायको ६ महिनाको निलम्बन, कब्जा गर्ने शक्तिको सुरक्षा वा यसका सेनाप्रति संगठित धम्कीको गम्भीर संकटकालिन परिस्थिति जस्तो खास अवस्थामा घटाउन सकिने छ । तर यस्तो कटौतीको बारेमा संरक्षक शक्तिलाई सदैव सूचित गरिनेछ र मृत्युदण्डको सवालमा सक्षम कब्जा गर्ने पदाधिकारीहरू समक्ष निवेदन गर्नको लागि उचित समय र मौका प्रदान गरिनेछ ।

## धारा ७६

कसुरको अभियोग लागेका संरक्षित व्यक्तिहरू, कब्जा गरिएको क्षेत्रमा हिरासतमा राखिनेछन् र यदि दोषी ठहरिएमा सोही ठाउँमा उनीहरूले सजाय भोग्ने छन् । यदि सम्भव भएमा तिनीहरूलाई अरु थुनुवाहरूबाट छुट्याइनेछ र उनीहरूले आफ्नो राम्रो स्वास्थय कायम राख्न पर्याप्त हुने भोजन र निरोगिताको अवस्था उपभोग गर्न पाउने छन् जुन कम्तीमा पनि कब्जा गरिएको क्षेत्रमा विद्यमान रहेको बन्दीगृहमा पाउने सरह हुनेछ ।

उनीहरूले आफ्नो स्वास्थ्य अवस्थाको आवश्यकता अनुसार औषधी उपचार प्राप्त गर्नेछन् ।

उनीहरूलाई आवश्यक पर्न सक्ने कुनै पनि आध्यात्मिक सहयोग पनि प्राप्त गर्न सक्ने अधिकार हुनेछ ।

महिलाहरूलाई छुट्टै कोठाहरूमा थुनिने छ र प्रत्यक्ष रुपमा महिलाहरू कै रेखदेखमा राखिनेछ ।

नाबालकहरूलाई गरिने विशेष व्यवहारप्रति आवश्यक ध्यान पुऱ्याइनेछ ।

थुनिएका संरक्षित व्यक्तिहरूलाई धारा १४३ को व्यवस्था अनुसार संरक्षक शक्तिका र रेडक्रसको अन्तर्राष्ट्रिय समितिका प्रतिनिधिहरूद्वारा भेट्न पाउने अधिकार हुनेछ ।

यस्ता व्यक्तिहरूलाई हरेक महिना कम्तिमा एउटा राहत पुलिन्दा प्राप्त गर्ने अधिकार हुनेछ ।

## धारा ७७

कसुरको दोष लागेका वा कब्जा गरिएका क्षेत्रका अदालतहरूले दोषी ठहऱ्याइएका संरक्षित व्यक्तिहरूलाई कब्जा समाप्त भएपछि सान्दर्भिक अभिलेखहरूका साथ मुक्त भएको भू-भागका अधिकारीहरूलाई हस्तान्तरण गरिनेछ ।

## धारा ७८

यदि कब्जा गर्ने शक्तिले सुरक्षाका अत्यावश्यक कारणहरूबाट संरक्षित व्यक्तिहरूको सन्दर्भमा सुरक्षा उपायहरू अपनाउनु पर्ने आवश्यक ठानेमा  यसले बढीमा तिनीहरूलाई तोकिएको निवासमा वा नजरबन्दमा राख्न सक्नेछ ।

यस्ता तोकिएको निवास वा नजरबन्द सम्बन्धी फैसलाहरू कब्जा गर्ने शक्तिले वर्तमान महासन्धिका प्रावधानहरू अनुसार निर्धारित गर्ने नियमित प्रक्रिया अनुसार गरिनेछ । यो प्रक्रियाले सम्बन्धित पक्षहरूको पुनरावेदन गर्न पाउने अधिकारलाई समावेश गर्नेछ । पुनरावेदनहरूको फैसला सम्भव भएसम्म कम विलम्बका साथ गरिनेछ । फैसला समर्थन गरिएको अवस्थामा उक्त शक्तिले स्थापना गरेको सक्षम निकायबाट सो फैसला समय समयमा, सम्भव भए हरेक ६ महिनामा, पुनरावलोकन गरिनेछ ।

तोकिएको निवासमा बस्नुपर्ने भएका यसरी आफ्नो घर छोड्नु पर्ने अवस्थामा रहेका संरक्षित व्यक्तिहरूले, प्रस्तुत महासन्धिको धारा ३९ को सम्पूर्ण फाइदा उपभोग गर्न पाउनेछन् ।

## खण्ड ४
## नजरबन्दहरूसँग गरिने व्यवहारका नियमहरू
## परिच्छेद १
## सामान्य प्रावधानहरू
### धारा ७९

धारा ४१, ४२, ४३, ६८ र ७८ का प्रावधानहरू अनुसार गर्नु परेमा बाहेक, संघर्षरत पक्षहरूले सुरक्षित व्यक्तिहरूलाई नजरबन्द गर्ने छैनन् ।

### धारा ८०

नजरबन्दहरूसँग उनीहरूको पूर्ण नागरिक हैसियत रहिरहनेछ र उनीहरूको हैसियतसँग मिल्ने सम्बद्ध अधिकारहरू उपभोग गर्न पाउँछन् ।

### धारा ८१

संरक्षित व्यक्तिहरूलाई नजरबन्दमा राख्ने संघर्षरत पक्षहरूले उनीहरूको निर्वाहको लागि निःशुल्क व्यवस्था गर्नेछन् र उनीहरूको स्वास्थ्यको अवस्थाले चाहेको औषधि उपचार पनि प्रदान गर्नेछन् ।

यस्ता मूल्यहरूको भुक्तानीका लागि नजरबन्दहरूको भत्ता, तलव वा उनीहरूलाई दिनुपर्ने हिसाबबाट कुनै कटौती गरिनेछैन ।

नजरबन्दीमाथि, आश्रितहरूसँग उनीहरूको निर्वाहको पर्याप्त साधन छैन वा उनीहरू जीविकोपार्जन गर्न अक्षम छन् भने कब्जा गर्ने शक्तिले त्यस्ता आश्रितहरूको निर्वाहको व्यवस्था गर्नेछ ।

## धारा ८२

कब्जा गर्ने शक्तिले सम्भव भएसम्म नजरबन्दहरूको राष्ट्रियता, भाषा र रीति अनुसार निवासस्थानको व्यवस्था गर्नेछ । एउटै देशका नागरिक भएमा नजरबन्दहरू उनीहरूको भाषा फरक-फरक भएको कारणले मात्र छुट्याइने छैनन् ।

रोजगारी वा स्वास्थ्यको कारणले वा प्रस्तुत खण्डको परिच्छेद ९ का प्रावधानहरू लागू गर्ने उद्देश्यको लागि अस्थायी प्रकृतिले छुट्टिइनु पर्ने आवश्यकता भएकोमा बाहेक नजरबन्दको अवधिभरी एउटै परिवारका सदस्यहरू, खासगरी आमा-बाबु र छोराछोरीहरूलाई नजरबन्दको एउटै ठाउँमा एकैसाथ राखिनेछ । आमाबाबुको रेखदेख विना स्वतन्त्र रुपमा राखिएका आ-आफ्ना छोराछोरीहरूलाई आफूहरूसँगै नजरबन्दमा राख्न नजरबन्दहरूले अनुरोध गर्न सक्नेछन् ।

जहाँ जहाँ सम्भव हुन्छ, नजरबन्द भएका एउटै परिवारका सदस्यहरू एउटै परिसरमा राखिनेछन् र अरु समुचित पारिवारिक जीवन बिताउनको लागि सुविधाहरू सहित अन्य नजरबन्दहरू भन्दा, उनीहरूलाई छुट्टै आवास प्रदान गरिनेछ ।

## परिच्छेद २
## नजरबन्द गर्ने ठाउँहरू
## धारा ८३

नजरबन्द गर्ने शक्तिले युद्धको खतराको सम्भावना भएका क्षेत्रहरूमा नजरबन्द गर्ने ठाउँहरू खडा गर्नेछैन ।

कब्जा गर्ने शक्तिले संरक्षक शक्तिहरूको मध्यस्थ मार्फत शत्रु शक्तिहरूलाई नजरबन्द गर्ने ठाउँहरूको भौगोलिक अवस्थितिबारे सबै उपयोगी सूचनाहरू प्रदान गर्नेछ ।

सैनिक दृष्टिकोणले अनुमति दिएको अवस्थामा दिउँसो आकाशबाट प्रष्ट देखिने गरी नजरबन्द शिविरहरूलाई “आई सी” अक्षरहरूद्वारा संकेत गरिनेछ । तर सम्बन्धित शक्तिहरू अन्य कुनै संकेत प्रणालीबारे सहमत हुन सक्नेछन् ।  नजरबन्द शिविरहरू बाहेक अन्य कुनै ठाउँलाई यसरी संकेत गरिनेछैन ।

## धारा ८४

नजरबन्दहरू युद्धबन्दीहरू र अरु कुनै कारणले स्वतन्त्रता गुमाएका व्यक्तिहरू भन्दा छुट्टै निवास्थानमा राखिनेछन् र छुट्टै तरिकाले व्यवस्थित हुनेछन् ।

## धारा ८५

कब्जा गर्ने शक्ति नजरबन्दको शुरुवातदेखि नै संरक्षित व्यक्तिहरूलाई स्वास्थ्य र आरोग्यतासम्बन्धी सबै सुरक्षाहरू उपलब्ध र जलवायुको कठोरता र युद्धका प्रभावहरू विरुद्ध सुरक्षित भवनहरू वा आवासगृहमा राख्न, सबै आवश्यक र सम्भाव्य उपायहरू सुनिश्चित गर्न बाध्य हुनेछ । कुनै पनि अवस्थामा नजरबन्दका स्थायी स्थानहरू अस्वस्थकर स्थानमा वा त्यस्ता जिल्लाहरूमा जहाँको हावापानी नजरबन्दको स्वास्थ्यप्रति हानिकारक हुने ठाउँमा अवस्थित हुनेछैन । सबै अवस्थाहरूमा जहाँ कुनै संरक्षित व्यक्तिलाई अस्थायी रुपमा नजरबन्दमा राखिएको क्षेत्र अस्वस्थकर छ वा त्यस्तो ठाउँ छ जुन उसको स्वास्थ्यको लागि हानिकारक छ, परिस्थितिहरूले अनुमति दिएसम्म उसलाई जतिसक्दो छिटो नजरबन्दको लागि बढी उपयुक्त ठाउँमा सारिनेछ ।

ती परिसरहरू चिसोबाट पूर्ण रुपमा संरक्षित, खासगरी साँझ र उज्यालो हुनु अघिको अवधिमा (रातभर) पर्याप्त मात्रामा ताप र प्रकाशको व्यवस्था गरिएको हुनेछन् । सुत्ने कोठाहरू पर्याप्त मात्रामा फराकिलो र राम्रो हावादार हुनेछन् र हावापानी तथा नजरबन्दहरूको उमेर, लिंग र स्वास्थ्यको अवस्थालाई ध्यानमा राखेर पर्याप्त ओछ्यान र कम्बलहरू नजरबन्दहरूले पाउनेछन् ।

नजरबन्दहरूले आरोग्यताका नियमहरू अनुकूलका र सदैव स्वच्छ अवस्थामा राखिएका स्वास्थ्य सम्बन्धी सहुलियतहरू रातदिन प्रयोग गर्न पाउनेछन् । उनीहरूका व्यक्तिगत लुगाफाटा धुनको लागि र शौचालयमा प्रयोग गर्नको लागि पर्याप्त पानी र साबुन उपलब्ध गराइनेछ र यो उद्देश्यको लागि आवश्यक संरचनाहरू र सुविधाहरू उनीहरूलाई प्रदान गरिनेछ । पानीका फोहोराहरू वा स्नानागार पनि उपलब्ध हुनेछन् । स्नान र सरसफाइको लागि आवश्यक समय छुट्याइनेछ ।

अपवाद स्वरुप अस्थायीरुपमा पुरुषहरू नजरबन्द राखिएकै ठाउँमा तिनीहरूको पारिवारिक इकाईका सदस्य नभएका महिला बन्दीहरूलाई राख्नुपर्ने भएमा तिनीहरूको प्रयोगको लागि छुट्टै सुत्ने कोठाहरू सरसफाई र शौचालय इत्यादिको र आरोग्य सहुलियतहरूको व्यवस्था गर्नु बाध्यात्मक हुनेछ ।

## धारा ८६

जुनसुकै सम्प्रदायका भए पनि नजरबन्दहरूका धार्मिक सेवाहरूको लागि उपयुक्त हुने परिसर, कब्जा गर्ने शक्तिले उपलब्ध गराउनेछन् ।

## धारा ८७

अन्य उपयुक्त सुविधाहरू उपलब्ध भएको स्थानमा बाहेक, प्रत्येक नजरबन्द गर्ने स्थानमा चमेना गृहको स्थापना गरिनेछ । यस्ता गृहको उद्देश्य स्थानीय बजारभन्दा बढी मूल्य नपर्ने गरी नजरबन्दहरूलाई खाद्यान्न र दैनिक प्रयोगका वस्तुहरू किन्न दिनु हुनेछ जसमा साबुन, सुर्तीजन्य वस्तु तथा उनीहरूको व्यक्तिगत भलाई र आराम दिने सामानहरू समावेश हुनेछन् ।

चमेना गृहबाट प्राप्त नाफा नजरबन्दको प्रत्येक स्थानमा स्थापना हुने कोषमा जम्मा गरिनेछ र सोको प्रयोग उक्त ठाउँसँग सम्बद्ध कैदीहरूको फाइदाको लागि गरिनेछ । धारा १०२ मा प्रावधान गरिएको नजरबन्दहरूको समितिले यस्तो चमेना गृहको व्यवस्थापन र उक्त कोषको जाँच गर्न पाउनेछ ।

कुनै नजरबन्दको स्थान बन्द भएमा कल्याणकारी कोषमा बचेको रकम त्यही राष्ट्रियताका नजरबन्दहरूको लागि रहेको अर्को नजरबन्द गर्ने ठाउँको कल्याणकारी कोषमा स्थानान्तरण गरिनेछ अथवा यदि यस्तो ठाउँ छैन भने केन्द्रीय कल्याणकारी कोषमा स्थानान्तरण गरिनेछ जुन कब्जा गर्ने शक्ति अन्तर्गत रहेका सबै नजरबन्दहरूको फाइदाको लागि प्रयोग गरिनेछ । सबैको रिहाई भएको अवस्थामा सम्बन्धित शक्तिहरूबीच अन्यथा समझदारी भएमा बाहेक उक्त कोष कब्जा गर्ने शक्तिले नै राख्नेछ ।

## धारा ८८

हवाई आक्रमण र युद्धका अरु जोखिमहरू भएका नजरबन्दका सबै क्षेत्रहरूमा आवश्यक सुरक्षा सुनिश्चित गर्न पर्याप्त संख्या र ढाँचामा आश्रय स्थलहरू स्थापना गरिनेछन् । खतराको संकेत भएमा उल्लेखित खतराका विरुद्ध उनीहरूका कोठाहरूको सुरक्षाका लागि खटिएकाहरू बाहेक नजरबन्दहरू जति सक्दो चाँडो यस्ता आश्रय स्थलहरूमा प्रवेश गर्न स्वतन्त्र हुनेछन् । आवादीको सुरक्षाको लागि अपनाइएको कुनै पनि सुरक्षात्मक उपायहरू उनीहरूका लागि पनि लागू हुनेछन् ।

नजरबन्दको ठाउँमा आगलागीको विरुद्ध सबै आवश्यक पूर्व सावधानीहरू अपनाउनुपर्छ ।

## परिच्छेद ३

## खाना र कपडा

### धारा ८९

नजरबन्दहरूलाई प्रत्येक दिन दिइने खाद्य सामग्री मात्रा, गुणस्तर र प्रकारमा नजरबन्दहरूको स्वास्थ्यको अवस्था राम्रो राख्न र पोषण सम्बन्धी कमी हुनबाट बचाउन पर्याप्त हुनेछ । नजरबन्दहरूको परम्परागत भोजनबारे पनि ध्यान दिइनेछ।

नजरबन्दहरूको साथमा रहेको कुनै अतिरिक्त खाना आफ्नो खाना आफ्नो लागि पकाउनको लागि पनि उनीहरूलाई साधनहरू उपलब्ध गराइनेछ।

नजरबन्दहरूलाई पर्याप्त खानेपानी उपलब्ध गराइनेछ। सुर्तीजन्य वस्तु प्रयोगको लागि अनुमति दिइनेछ।

नजरबन्दहरूले गरेको परिश्रमको अनुपातमा, उनीहरूले अतिरिक्त खाद्य सामग्री प्राप्त गर्नेछन्।

गर्भवती महिला र सुत्केरीहरू र पन्ध्र वर्षभन्दा कम उमेरका बालबालिकाहरूलाई उनीहरूको शारीरिक आवश्यकताको अनुपातमा अतिरिक्त भोजन दिइनेछ।

### धारा ९०

हिरासतमा लिएपछि नजरबन्दहरूलाई लुगा, जुत्ता, भित्री लगाउने लुगा फेर्ने र आवश्यक भएमा थप आपूर्तिहरू प्राप्त गर्न सबै सुविधाहरू प्रदान गरिनेछ । यदि कुनै नजरबन्दसँग मौसमलाई अनुकूल पर्याप्त लुगा कपडा रहेनछ र उनीहरू किन्न पनि असमर्थ छन् भने कब्जा गर्ने शक्तिले विना मूल्य उनीहरूलाई सो उपलब्ध गराउनेछ।

कब्जा गर्ने शक्तिले नजरबन्दहरूलाई उपलब्ध गराएको कपडा र उनीहरूको आफ्नै लुगामा देखिने गरी राखिएका चिन्हहरू उनीहरूलाई कलंकित गर्ने खालका हुने छैनन्, न त उनीहरूको उपहास गर्ने खालका नै हुनेछन्।

कामदारहरूलाई उनीहरूले कामको प्रकृतिको आवश्यक भएमा सुरक्षात्मक पोशाक सहित कामका लागि उपयुक्त लुगाहरू प्राप्त हुनेछन्।

## परिच्छेद ४

## आरोग्यता र औषधोपचार

### धारा ९१

नजरबन्दको प्रत्येक ठाउँमा योग्यता प्राप्त चिकित्सकको निर्देशनको मातहतमा एक समुचित चिकित्सालय रहेछ जहाँ नजरबन्दहरूले उनीहरूलाई आवश्यक पर्ने हेरचाहका साथै समुचित आहार प्राप्त गर्नेछन् । सरुवा वा मानसिक रोगका बिरामीहरूका लागि अलग वार्डहरूको स्थापना गरिनेछ ।

प्रसूतिका बिरामीहरू र गम्भीर रोगबाट सताइएका नजरबन्दहरू वा जसको अवस्थाले गर्दा निजलाई विशेष उपचार, शल्यक्रिया वा अस्पतालको स्याहार आवश्यक छ त्यस्तालाई पर्याप्त उपचार दिन सकिने संस्थामा भर्ना गर्नुपर्छ र उनीहरूले साधारण जनतालाई भन्दा कम नहुने गरी उपचार पाउनेछन् ।

नजरबन्दहरूले पाएसम्म आफ्नै राष्ट्रियताका स्वास्थ्यकर्मीहरूबाट सेवा पाउने छन् ।

नजरबन्दहरूमाथि परीक्षणको लागि स्वास्थ्य पदाधिकारीहरू समक्ष आफूलाई प्रस्तुत गर्नबाट रोक लगाइने छैन । अनुरोध गरेमा, कब्जा गर्ने शक्तिका स्वास्थ्य अधिकारीहरूले उपचार गराएका प्रत्येक नजरबन्दलाई उनीहरूको रोग वा चोटको प्रकृति, गरिएको उपचारको प्रकृति र अवधि देखिने आधिकारिक प्रमाणपत्र दिनेछन् । त्यो प्रमाणपत्रको प्रतिलिपि धारा १४० मा व्यवस्था गरिएको केन्द्रीय निकायमा पठाइनेछ ।

नजरबन्दहरूको स्वास्थ्य राम्रो राख्नको लागि आवश्यक पर्ने सामग्रीहरू, खास गरी कृत्रिम दाँत र अन्य बनावटी सामग्रीहरू र चश्माहरू सहितको उपचार, नजरबन्दहरूलाई, विना कुनै दस्तुर प्राप्त हुनेछ ।

### धारा ९२

नजरबन्दहरूको स्वास्थ्य परीक्षण कम्तिमा महिनाको एक पटक गरिनेछ । सो को उद्देश्य खासगरी नजरबन्दहरूको स्वास्थ्यको सामान्य अवस्था परीक्षण गर्नु, पोषण र सरसफाई हेर्नु र सरुवा रोगहरू, खासगरी क्षयरोग, औलो र यौन रोग पत्ता लगाउनु हुनेछ । यस्ता परीक्षणहरूमा खासगरी प्रत्येक नजरबन्दको वजन जाँच्ने र कम्तिमा एक वर्षमा एकपटक रेडियोस्कोपिक परीक्षण (विकिरणद्वारा गरिने प्रत्यक्ष अवलोकन) गर्ने कार्य समावेश हुनेछ ।

# परिच्छेद ५
# धार्मिक, बौद्धिक र शारीरिक गतिविधिहरू
## धारा ९३

नजरबन्दहरूले आफ्ना आस्थाका समारोहहरूमा उपस्थित हुने समेत आफ्नो धार्मिक कर्तव्यको अभ्यास गर्नलाई पूर्ण स्वतन्त्रताको उपभोग गर्नेछन् तर कब्जा गर्ने अधिकारीहरूले निर्धारित गरेको अनुशासन तालिकाको अनुशरण गर्ने शर्त पालना गर्नुपर्छ।

नजरबन्द बनाइएका पुजारीहरूलाई उनीहरूको समुदायका सदस्यहरूलाई स्वतन्त्रतापूर्वक धार्मिक सेवा प्रदान गर्न अनुमति दिइनेछ। यो उद्देश्यका लागि कब्जा गर्ने शक्तिले एउटै भाषा बोल्ने र एउटै धर्मसँग सम्बन्धित नजरबन्दहरू भएका नजरबन्दका धेरै ठाउँहरूमा तिनीहरूको न्यायोचित बाँडफाँड सुनिश्चित गर्नेछ। यदि यस्ता पुजारीहरू सानो संख्यामा भएमा कब्जा गर्ने शक्तिले उनीहरूलाई एक ठाउँबाट अर्को ठाउँसम्म जान यातायातको साधन सहित आवश्यक सुविधा पुऱ्याउनेछ र अस्पतालमा भएका कुनै पनि नजरबन्दहरूलाई भेट्ने उनीहरूलाई अधिकार प्राप्त हुनेछ। पुजारीहरू आफ्नो धार्मिक कामसँग सम्बन्धित विषयमा कब्जा गर्ने देशका अधिकारीहरूसँग र सम्भव भएसम्म आफ्नो आस्थाका अन्तर्राष्ट्रिय संगठनहरूसँग पत्राचार गर्न स्वतन्त्र हुनेछन्। त्यस्तो पत्राचार धारा १०७ मा उल्लिखित निर्धारित संख्या (कोटा) को भाग बनेको मानिनेछैन। तर यो धारा १२२ को व्यवस्थाको अधीन हुनेछ।

यदि नजरबन्दहरूले आफूले चाहेको बेलामा आफ्नो आस्थाका पुजारीहरूको सहयोग पाउँदैनन् भने अथवा यदि उनीहरूको संख्या अति कम छ भने कब्जा गर्ने शक्तिको सहमतिमा, त्यही आस्थाका स्थानीय धार्मिक अधिकारीहरूले नजरबन्दहरूकै आस्थाको एक जना पुजारी नियुक्त गर्न सक्छन् वा यदि सम्प्रदायको दृष्टिकोणले यस्तो तरिकाको सम्भाव्यता छ भने सोही धार्मिक पुजारी वा कुनै योग्यता प्राप्त सर्वसाधारणलाई पनि नियुक्त गर्न सकिने छ। यसरी नियुक्त व्यक्तिले धारण गरेको धार्मिक पदलाई प्रदान गरिएको सुविधा उपभोग गर्नेछ। यसरी नियुक्त गरिएका व्यक्तिहरूले कब्जा गर्ने शक्तिले अनुशासन र सुरक्षाको हितमा बनाएका सबै नियमहरूको पालना गर्नेछन्।

## धारा ९४

कब्जा गर्ने शक्तिले नजरबन्दहरूका बीच बौद्धिक, शैक्षिक र मनोरञ्जनात्मक गतिविधिहरू तथा खेलकूदलाई प्रोत्साहित गर्नेछ, तर सोमा भाग लिने नलिनेबारे उनीहरू स्वतन्त्र हुनेछन्। उनीहरूको व्यायामको निरन्तरता सुनिश्चित गर्न यसले सबै सम्भव उपायहरू, खास गरेर उपयुक्त परिसरहरू प्रदान गर्ने व्यवस्था गर्नेछ।

आफ्नो अध्ययन जारी राख्न वा नयाँ विषयहरू लिन नजरबन्दहरूलाई सबै सम्भव सुविधाहरू प्रदान गरिनेछ । बालबालिका र युवाहरूको शिक्षा सुनिश्चित गरिनेछ, तिनीहरूलाई नजरबन्दको ठाउँभित्र वा बाहिर विद्यालय जान अनुमति दिइनेछ ।

नजरबन्दहरूलाई शारीरिक व्यायाम, खेलकूद र बाहिर खेल्ने खेलको लागि मौका प्रदान गरिनेछ । यो उद्देश्यको लागि नजरबन्दका सबै ठाउँहरूमा पर्याप्त खुल्ला ठाउँ छुट्याइनेछ । युवा र बालबालिकाहरूका लागि विशेष खेल मैदान आरक्षित गरिनेछ ।

## धारा ९५

कब्जा गर्ने शक्तिले नजरबन्दहरूले आफूले इच्छा नगरेसम्म, उनीहरूलाई कामदारको रुपमा नियुक्त गर्नेछैन । यदि नजरबन्द नभएको कुनै संरक्षित व्यक्तिले बाध्यतापूर्वक रोजगारी स्वीकार गरेको खण्डमा प्रस्तुत महासन्धिको धारा ४० वा ५१ को उल्लंघन हुनेछ र कुनै पनि अवस्थामा हीनताबोध वा अपमान हुने प्रकृतिको काममा रोजगारीमा लगाउन निषेध गरिएको छ ।

छ हप्ताको कार्य अवधिपछि आठ दिनको अग्रिम सूचना दिएर, कुनै पनि समयमा काम त्याग्न नजरबन्दहरू स्वतन्त्र हुनेछन् ।

कब्जा गर्ने शक्तिको अधिकारमा यी प्रावधानहरूले नजरबन्द चिकित्सकहरू, दन्त चिकित्सकहरू र अरु स्वास्थ्यकर्मीहरूलाई उनीहरूका पेशागत क्षमतामा उनीहरूसँगै हुने नजरबन्दहरूको निम्ति रोजगारमा लगाउन अथवा नजरबन्दहरूलाई नजरबन्दको ठाउँमा प्रशासनिक र मर्मत सम्भारको काममा लगाउन वा त्यस्ता व्यक्तिहरूलाई भान्साको अथवा घरायसी काममा लगाउन अथवा त्यस्ता व्यक्तिहरूलाई हवाई बमवर्षा वा युद्धका अन्य जोखिमहरू विरुद्ध नजरबन्दको सुरक्षाको काममा लगाउनको लागि कुनै बाधा उत्पन्न गर्ने छैनन् । तर कुनै पनि नजरबन्दलाई चिकित्सा पदाधिकारीको विचारमा शारीरिक रुपले अनुपयुक्त काममा लगाइनेछैन ।

कब्जा गर्ने शक्तिले काम गर्ने परिस्थिति, औषधी उपचार र ज्यालाको भुक्तानी सम्बन्धी सबै उत्तरदायित्वहरू बहन गर्नेछ र रोजगारीमा लगाइएका सबै नजरबन्दहरूले पेशागत दुर्घटनाहरू र रोगहरू बापतको क्षतिपूर्ति पाउँछन् भन्ने कुराको पनि सुनिश्चित गर्नेछ । उल्लिखित काम गर्ने अवस्था र क्षतिपूर्तिको लागि तोकिएको स्तर राष्ट्रिय नियम कानुन र विद्यमान चलनहरू बमोजिम हुनेछन्, तिनीहरू कुनै पनि अवस्थामा त्यही जिल्लामा, त्यही प्रकृतिको काम गर्नेहरूले प्राप्त गरिरहेको भन्दा कम हुने छैनन्, गरिएको कामको ज्यालाको निर्धारण कब्जा गर्ने शक्ति र नजरबन्दहरू र, परिस्थिति उत्पन्न भएमा, कब्जा गर्ने शक्तिभन्दा अन्य रोजगारीदाताहरू बीच भएको विशेष सम्झौताद्वारा न्यायोचित तरीकाले गरिनेछ र त्यसो गर्दा नजरबन्दहरूको निर्वाहको

व्यवस्था गर्नु र उनीहरूको स्वास्थ्यको अवस्था अनुसार औषधी उपचारको व्यवस्था गर्नु कब्जा गर्ने शक्तिको कर्तव्य हो भन्ने कुराबारे ध्यान पुर्‍याइनेछ । यो धाराको तेस्रो अनुच्छेदमा उल्लेख गरिएको श्रेणीको काममा स्थायी रुपमा लगाइएका नजरबन्दहरूलाई कब्जा गर्ने शक्तिले उचित ज्याला दिनेछ । काम गर्ने अवस्थाहरू र यसरी काममा लगाइएका नजरबन्दहरूको हकमा पेशागत दुर्घटना र रोगहरू बापतको क्षतिपूर्ति त्यही प्रकृतिको कामको लागि लागू हुने भन्दा कम स्तरको हुनेछैन ।

## धारा ९६

श्रमका सबै शिविरहरू नजरबन्दका ठाउँको भाग हुनेछन् र त्यसैमा आश्रित हुनेछन् । कब्जा गर्ने शक्तिका सक्षम पदाधिकारीहरू र सो नजरबन्दको स्थानको समादेशक (नियन्त्रण अधिकारी) प्रस्तुत महासन्धिको नजरबन्द सम्बन्धी प्रावधानहरूको अनुशरणबारे सुपरीवेक्षण गर्न उत्तरदायी हुनेछ । उक्त अधिकारीले, उसका अधीनस्थ श्रम शिविरहरूको अद्यावधिक सूची राख्नेछ र यसलाई कब्जा गर्ने शक्तिका, रेडक्रसको अन्तर्राष्ट्रिय समितिका र अरु मानवतावादी संगठनहरूका नजरबन्दको स्थान भ्रमण गर्न सक्ने प्रतिनिधिहरूलाई पठाउनेछ ।

## परिच्छेद ६
## व्यक्तिगत सम्पत्ति र आर्थिक स्रोतहरू
## धारा ९७

नजरबन्दहरूलाई व्यक्तिगत प्रयोजनका सामानहरू राख्न अनुमति दिइनेछ । स्थापित प्रक्रिया अनुसार बाहेक उनीहरूको अधीन भएका रुपैयाँ पैसाहरू, चेकहरू, तमसुकहरू र मूल्यवान वस्तुहरू उनीहरूबाट लिन सकिने छैन । तिनलाई प्राप्त गरेको विस्तृत भरपाईहरू दिइनेछ ।

धारा ९८ मा प्रावधान गरेअनुसार हरेक नजरबन्दको खातामा रकमहरू जम्मा गरिनेछ । यस्ता रकमहरू, यसको धनीलाई नजरबन्द गरेको भू-भागमा लागू रहेको कानुनले आवश्यक गरेमा वा नजरबन्दले आफ्नो सहमती दिएमा बाहेक, अरु कुनै मुद्रामा परिवर्तन गरिनेछैन ।

सबैभन्दा बढी महत्वपूर्ण यो छ कि व्यक्तिगत वा भावात्मक मूल्य हुने सामानहरू लिइनेछैन ।

महिला नजरबन्दहरूलाई महिला बाहेक अरुद्वारा खानतलासी गरिने छैन ।

रिहा हुँदा वा स्वदेश फिर्ता हुँदा नजरबन्दहरूलाई नजरबन्दको समयमा उनीहरूबाट लिइएका सबै सामानहरू, रुपैयाँ पैसाहरू वा अरु मूल्यवान वस्तुहरू फिर्ता दिइनेछ र लागू भइरहेको कानुनद्वारा कब्जा गर्ने शक्तिले रोक्का गरेका सामानहरू वा रकमहरू बाहेक धारा ९८ अनुसार उनीहरूको

खातामा बाँकी भएको रकम उनीहरूलाई दिइनेछ । यदि कुनै नजरबन्दको सम्पत्ति यसरी रोक्का भयो भने उक्त धनीले विस्तृत भरपाई पाउनेछ ।

नजरबन्दको साथमा रहेको पारिवारिक वा परिचय पत्र सम्बन्धी कागजातहरू भरपाई नदिइकन लिइनेछैन । कुनै पनि समयमा नजरबन्दहरूलाई परिचयपत्र सम्बन्धी कागजातहरू विना राखिने छैन । यदि उनीहरूसँग त्यस्तो केही पनि छैन भने उनीहरूलाई कब्जा गर्ने शक्तिले तयार गरेको विशेष कागजात दिइने छ जसले उनीहरूको नजरबन्दको अवधि समाप्त नहुञ्जेलसम्मको लागि परिचय पत्रको काम गर्नेछ ।

नजरबन्दहरूले किनमेल गर्न समर्थ हुनको लागि आफूसँग नगद वा खरिद कुपनको रुपमा निश्चित परिमाणको रकम राख्न सक्नेछन् ।

## धारा ९८

सबै नजरबन्दहरूले सुर्तीजन्य र शौचालय सम्बन्धी आवश्यक वस्तु र सामानहरू जस्ता मालसामान र सामग्रीहरू किन्नलाई पर्याप्त हुने गरी नियमित रुपमा भत्ता पाउनेछन् । यस्तो भत्ता उधारो वा खरीद कुपनको रुपमा पनि हुन सक्छ । यसको अतिरिक्त नजरबन्दहरूले उनीहरू निष्ठावान रहेको शक्ति, संरक्षक शक्तिहरू, उनीहरूलाई वा उनीहरूका परिवारहरूलाई सहयोग गर्न सक्ने संघ संगठनहरूबाट भत्ताहरू प्राप्त गर्न सक्नेछन् साथै कब्जा गर्ने शक्तिको कानुनअनुसार उनीहरूको सम्पत्तिबाट हुने आम्दानी पनि प्राप्त गर्न सक्नेछन् । उनीहरू निष्ठावान भएको शक्तिले प्रदान गर्ने भत्ताको रकम हरेक श्रेणीका नजरबन्दहरू (अशक्त, बिरामी, गर्भवती महिला आदि) को लागि एक समान हुनेछ तर प्रस्तुत महासन्धिको धारा २७ ले निषेध गरेअनुसार त्यसलाई नजरबन्दहरूका बीच विभेदपूर्ण तरीकाले त्यो शक्तिले भाग लगाउने छैन वा कब्जा गर्ने शक्तिले वितरण गर्ने छैन ।

प्रत्येक नजरबन्दको लागि कब्जा गर्ने शक्तिले एउटा नियमित खाता खोल्नेछ, जसमा वर्तमान धारामा उल्लेख गरिएका भत्ताहरू, कमाएको ज्याला, प्राप्त गरेको भुक्तानीका साथै उसबाट लगिएको यस्तो रकम ऊ नजरबन्द भएको भू-भागमा लागू भएको कानुन अनुसार उपलब्ध हुन सक्ने रकम सो खातामा जम्मा गरिनेछ । नजरबन्दहरूलाई उनीहरूको परिवारलाई वा अरु आश्रितहरूलाई रकम पठाउनको लागि त्यस्तो भू-भागमा लागू रहेको कानुनसँग अनुकूल हुने गरी सबै सुविधाहरू दिइनेछ । कब्जा गर्ने शक्तिले तोकेको सीमाभित्र आफ्नै व्यक्तिगत उपयोगको लागि उनीहरूले आवश्यक रकम झिक्न सक्नेछन् । उनीहरूलाई कुनै पनि समयमा आफ्नो खाताहरूबारे जानकारी लिन र प्रतिलिपि प्राप्त गर्न उचित सुविधा दिइनेछ । संरक्षक शक्तिको

अनुरोधमा बैंक खाताको विवरण दिइनेछ र नजरबन्दको स्थानान्तरण भएको अवस्थामा साथै लगिनेछ ।

## परिच्छेद ७

## प्रशासन र अनुशासन

### धारा ९९

नजरबन्दको प्रत्येक स्थान कब्जा गर्ने शक्तिको नियमित सैनिक शक्ति अथवा नियमित निजामती प्रशासनबाट छनौट गरिएको उत्तरदायी अधिकृतको मातहत राखिनेछ । नजरबन्दको ठाउँको जिम्मेवार अधिकृतले आफूसँग आधिकारिक भाषामा अथवा उसको देशका आधिकारिक भाषाहरूमध्ये कुनै एक भाषामा वर्तमान महासन्धिको एकप्रति राखेको हुनुपर्छ र निज यसको कार्यान्वयनको लागि उत्तरदायी हुनेछ । नजरबन्दहरूलाई नियन्त्रणमा राख्ने कर्मचारीहरूलाई प्रस्तुत महासन्धिमा भएका प्रावधानहरूबारेमा र सो निश्चितरुपमा लागू गर्न अपनाइएका उपायहरूको बारेमा सिकाइनेछ ।

प्रस्तुत महासन्धिको मूलपाठ र उक्त महासन्धि अन्तरगत गरिएका विशेष सम्झौताहरूलाई नजरबन्द राख्ने ठाउँ भित्र नजरबन्दहरूले बुझ्ने भाषामा जानकारीको लागि राखिनेछ अथवा नजरबन्दहरूको समितिको जिम्मामा रहनेछ ।

नियमहरू, आदेशहरू, सूचनाहरू र हरेक किसिमका प्रकाशनहरूबारे नजरबन्दहरूलाई सूचित गरिनेछ र उनीहरूले बुझ्ने भाषामा जानकारीको लागि नजरबन्दीको ठाउँभित्र राखिनेछ ।

त्यसैगरी नजरबन्दहरूलाई व्यक्तिगत रुपमा सम्बोधन गरिएको प्रत्येक आदेश र समादेश पनि उनीहरूले बुझ्ने भाषामा दिइनेछ ।

### धारा १००

नजरबन्दको ठाउँमा अनुशासन प्रणाली मानवतावादी सिद्धान्तहरूको अनुरुप हुनेछ र कुनै पनि अवस्थामा नजरबन्दहरूको स्वास्थ्यलाई खतरा पुऱ्याउने कुनै शारीरिक परिश्रम वा शारीरिक वा नैतिक पीडा पुऱ्याउने खालका नियमहरूलाई समावेश गर्ने छैन । शरीरमा खोपेर वा चिन्ह वा संकेतको छाप लगाएर पहिचान गराउने कार्य निषेध गरिएको छ ।

खासगरी लामो समयसम्म उभ्याइने र हाजिरी लिने, दण्ड अभ्यास, सैनिक अभ्यास र युद्ध परिचालन खानाको राशन कट्टी निषेध गरिएको छ ।

## धारा १०१

नजरबन्दहरूलाई उनीहरू जुन शक्तिको अधीन छन् तिनीहरू समक्ष आफूलाई राखिएको नजरबन्दी अवस्थाको बारेमा निवेदन दिने अधिकार हुनेछ ।

विना कुनै रोकटोक उनीहरूलाई नजरबन्दी समिति मार्फत र यदि उनीहरूले आवश्यक सम्झेमा संरक्षक शक्तिका प्रतिनिधिहरू समक्ष नजरबन्दीको अवस्थाको सम्बन्धमा उनीहरूले उजुरी गर्न खोजेको कुरालाई औंल्याउन निवेदन दिने अधिकार समेत हुनेछ ।

यस्ता निवेदन र उजुरीहरू कुनै फेरबदल नगरीकन तत्काल संप्रेषण गरिने छन् र यद्यपि त्यस्ता उजुरी आधार विहिन भए पनि तिनीहरूलाई सजाय गरिने कारण बन्न सक्ने छैनन् ।

नजरबन्दका समितिहरूले संरक्षक शक्तिका प्रतिनिधिहरूलाई नजरबन्दको ठाउँको अवस्था र नजरबन्दहरूको आवश्यकताका बारेमा समयसमयमा प्रतिवदेनहरू पठाउन सक्नेछन् ।

## धारा १०२

नजरबन्दको प्रत्येक ठाउँमा नजरबन्दहरूले उनीहरूलाई कब्जा गर्ने शक्ति र संरक्षक शक्ति, रेडक्रसको अन्तर्राष्ट्रिय समिति र उनीहरूलाई सहयोग गर्न सक्ने कुनै पनि अन्तराष्ट्रिय संगठन समक्ष प्रतिनिधित्व गर्न अधिकार प्राप्त एउटा समितिका सदस्यहरूलाई, प्रत्येक छ महिनामा गोप्य मतदानद्वारा स्वतन्त्ररुपमा निर्वाचन गर्नेछन् । समितिका सदस्यहरू पुनः निर्वाचित हुनलाई योग्य हुनेछन् ।

यसरी निर्वाचित नजरबन्दहरूले कब्जा गर्ने अधिकारीहरूले त्यस निर्वाचनलाई स्वीकृति दिएपछि आफ्नो काम प्रारम्भ गर्नेछन् । इन्कारी वा बर्खास्तगी गर्ने कुनै पनि कारणहरू सम्बन्धित संरक्षक शक्तिलाई सूचित गरिनेछ ।

## धारा १०३

नजरबन्द समितिहरूले नजरबन्दहरूको शारीरिक, आध्यात्मिक र बौद्धिक भलाइका कामहरूलाई अगाडि बढाउने छन् ।

नजरबन्दहरूले आफैबीच आपसी सहयोगको व्यवस्था गर्न, खास गरेर कुनै प्रणाली स्थापित गर्न निर्णय गरेको अवस्थामा प्रस्तुत महासन्धिका अन्य प्रावधानहरू अन्तरगत तोकिएका विशेष कर्तव्यहरूका अतिरिक्त यो संगठन पनि नजरबन्दको समितिहरूको परिधिभित्रै पर्नेछ ।

## धारा १०४

यदि नजरबन्दहरूले गर्नुपर्ने अन्य कामले उनीहरूलाई नजरबन्द समितिका कर्तव्य सम्पादन गर्न कठिनाई भएमा नजरबन्दहरूको समितिहरूका सदस्यहरूलाई अरु कुनै पनि काम गर्न लगाइने छैन ।

नजरबन्दहरूको समितिहरूका सदस्यहरूले आफै मध्येबाट आवश्यकता अनुसार सहायकहरू नियुक्त गर्न सक्नेछन् । उनीहरूलाई सबै भौतिक सुविधाहरू खास गरी उनीहरूको कर्तव्य पूरा गर्नको लागि (जस्तै श्रम शिविरहरूमा भ्रमण र आपूर्तिहरूको प्राप्ति आदि) आवागमनको लागि केही सुविधा दिइनेछ ।

त्यस्तै नजरबन्दहरूको समितिका सदस्यहरूलाई कब्जा गर्ने अधिकारीहरू, संरक्षक शक्तिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति र उनीहरूका प्रतिनिधि र नजरबन्दहरूलाई सहयोग गर्ने संगठनहरूसँग हुलाक र टेलिग्राफ मार्फत संचार गर्न सबै सुविधाहरू प्रदान गरिने छ । श्रम शिविरहरूमा रहेका समितिका सदस्यहरूले पनि नजरबन्दको प्रमुख स्थानमा भएका समितिका सदस्यहरूसँग संचारका लागि समान सुविधा पाउनेछन् । यस्ता संचारहरूलाई सीमित गरिने छैन, न त धारा १०७ मा उल्लिखित सिमित भाग (कोटा) को रुपमा नै लिइनेछ ।

स्थानान्तरण हुने नजरबन्द समितिका सदस्यहरूलाई आफ्ना उत्तराधिकारीहरूलाई समसामयिक गतिविधिको बारेमा परिचित गराउन समुचित समय प्रदान गरिनेछ ।

## परिच्छेद ८
## बाहिरियाहरूसँगको सम्बन्ध

## धारा १०५

संरक्षित व्यक्तिहरूलाई नजरबन्दमा लिनासाथ कब्जा गर्ने शक्तिहरूले उनीहरूलाई, उनीहरू निष्ठावान रहेको शक्तिलाई र उनीहरूको संरक्षक शक्तिलाई यो परिच्छेदका प्रावधानहरू कार्यान्वयन गर्न गरिएका उपायहरू बारेमा जानकारी गराउनेछन् । त्यसै गरी कब्जा गर्ने शक्तिहरूले सम्बन्धित शक्तिहरूलाई यस्ता उपायहरूमा पछि गरिने हेरफेर बारे पनि सूचित गर्नेछन् ।

## धारा १०६

नजरबन्द हुनासाथ वा कम्तिमा पनि नजरबन्दको ठाउँमा आएको एक हप्ताभन्दा ढिलो नहुने गरी र त्यस्तै बिरामी परेमा वा अर्को नजरबन्दी स्थान वा अस्पतालमा स्थानान्तरण भएमा प्रत्येक नजरबन्दलाई एकातिर सोझै उसका परिवारलाई र अर्कोतिर धारा १४० मा प्रावधान गरिएको केन्द्रिय निकायलाई सम्भव भए, प्रस्तुत महासन्धिको अनुसूचीमा भएको नमूनासँग मिल्दोजुल्दो नजरबन्द पत्र (कार्ड उसका आफन्तहरूलाई उसको थुना, ठेगाना र स्वास्थ्यको अवस्थाको बारेमा सूचित गर्ने गरी पठाउन लगाइनेछ । यस्ता पत्रहरू यथासम्भव शिघ्र पठाइनेछ र कुनै किसिमको ढिलाई गरिनेछैन ।

## धारा १०७

नजरबन्दहरूलाई पत्र र कार्डहरू पठाउन र प्राप्त गर्न अनुमति दिइनेछ । यदि कब्जा गर्ने शक्तिले प्रत्येक नजरबन्दले पठाउने पत्र र कार्डहरूको संख्या सीमित गर्न चाहन्छ भने उक्त संख्या महिनाको २ ओटा पत्र र ४ ओटा कार्डभन्दा कम हुनेछैन, यस्ता पत्र र कार्डहरू यथासम्भव प्रसतुत महासन्धिको अनुसूचीमा भएको नमूना अनुरुप हुने गरी निर्धारण गरिनेछ । यदि नजरबन्दहरूलाई प्रेषित  पत्रहरू सीमित गर्नुपर्ने भएमा, त्यो आदेश सम्भवतः कब्जा गर्ने शक्तिको अनुरोधमा उनीहरू निष्ठावान रहेको शक्तिद्वारा मात्र दिन सकिनेछ । यस्ता पत्रहरू र कार्डहरू समुचित शीघ्रतासाथ पुऱ्याउनुपर्छ, तिनीहरूलाई अनुशासनात्मक कारणले ढिलो गर्न वा राख्न सकिनेछैन ।

लामो समयदेखि समाचार नपाएका वा सामान्य हुलाक मार्गबाट आफ्ना नातेदारहरूबाट समाचार प्राप्त गर्न वा उनीहरूलाई समाचार पठाउन असम्भव महसुस गरेका युद्धबन्दीहरूलाई साथै आफ्ना घरदेखि निकै टाढा रहेकाहरूलाई टेलिग्राम पठाउन अनुमति दिइनेछ र त्यसको दस्तुर उनीहरूसँग भएको मुद्रामा उनीहरूद्वारा नै भुक्तानी गरिनेछ । अत्यन्त जरुरी मानिएका अवस्थाहरूमा उनीहरू यो प्रावधानद्वारा लाभान्वित हुनेछन् ।

नियमतः नजरबन्दहरूका पत्रहरू उनीहरूकै भाषामा लेखिने छन् । संघर्षका पक्षहरूले अरु भाषाहरूमा पनि पत्राचार गर्न अधिकार प्रदान गर्न सक्नेछन् ।

## धारा १०८

नजरबन्दहरूलाई हुलाकद्वारा वा अरु कुनै माध्यमद्वारा उनीहरूका आवश्यकताहरू पूरा गर्न सक्ने व्यक्तिगत पुलिन्दाहरू वा सामूहिक पोकाहरू प्राप्त गर्न दिइनेछ, जसमा खासगरी खाद्यान्न, लत्ताकपडाहरू, औषधि, किताबहरू र साथै धर्म सम्बन्धी, शैक्षिक र मनोरञ्जनात्मक प्रकृतिका

वस्तुहरू समावेश गरिएका हुन्छन् । यस्ता वस्तुका पोकाहरूले कुनै पनि हालतमा कब्जा गर्ने शक्तिलाई प्रस्तुत महासन्धिद्वारा उसले पालना गर्नुपर्ने आफ्ना कर्तव्यबाट मुक्त बनाउन सक्नेछैन ।

यदि सैनिक आवश्यकताले गर्दा वस्तुका खेपहरूलाई सीमित गर्नुपर्ने भएमा, संरक्षक शक्ति र रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा नजरबन्दहरुलाई सहायता दिइरहेको र त्यस्तो वस्तुका खेपहरूलाई चलान गर्न जिम्मेवार भएका अरु कुनै पनि संगठनलाई सो बारेमा उचित सूचना दिइनेछ ।

व्यक्तिगत पुलिन्दा र सामूहिक वस्तुका खेपहरू पठाउने शर्तहरूबारे, आवश्यक भएमा, सम्बन्धित शक्तिहरूबीच विशेष सम्झौता गरिनेछ तर, यसले कुनै पनि अवस्थामा नजरबन्दहरूले राहत सामग्रीहरूको आपूर्ति प्राप्त गर्ने कार्यलाई ढिलाई गर्नेछैन । कपडा र खाद्यान्नको पूलिन्दामा किताब समावेश गरिने छैन । औषधिका राहत आपूर्तिहरू नियमतः सामूहिक पुलिन्दामा पठाइनेछ ।

## धारा १०९

संघर्षरत पक्षहरूको बीचमा सामूहिक राहत वस्तुहरूको खेपहरूको प्राप्ति र वितरण सम्बन्धमा विशेष सम्झौता नभएको अवस्थामा प्रस्तुत महासन्धिको अनुसूचीमा भएको सामूहिक राहत सम्बन्धी नियमहरू लागू हुनेछन् ।

माथि उल्लिखित विशेष सम्झौताका प्रावधानहरूले कुनै पनि अवस्थामा नजरबन्दहरूका लागि आएका सामूहिक राहत वस्तुका खेपहरू पाउनेहरूको हितमा आफ्नो मातहतमा लिने, त्यसलाई वितरण गर्ने र त्यसलाई फर्स्यौट गर्ने नजरबन्दहरूको समितिको अधिकारलाई सीमित गर्नेछैन । न त यस्तो सम्झौताले प्राप्तकर्ताहरूलाई त्यसको वितरणबारे सुपरीवेक्षण गर्ने संरक्षक शक्तिहरूका प्रतिनिधिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा नजरबन्दहरूलाई सहयोग प्रदान गरिरहेको र सामूहिक वस्तुका खेपहरू चलान गर्ने जिम्मेवार अरु कुनै संगठनको अधिकारलाई सीमित गर्नेछ ।

## धारा ११०

नजरबन्दहरूका लागि पठाइने सबै राहत सामग्रीका खेपहरू आयात, भन्सार र अन्य दस्तुरहरूबाट मुक्त हुनेछन् ।

अरु देशहरूबाट नजरबन्दहरूलाई पार्सल पोष्टबाट पठाइएका राहत वस्तुका पुलिन्दाहरू र हुलाकद्वारा पठाइएका सबै वस्तुहरू र रुपैयाँ पैसाहरू अथवा उनीहरूले हुलाक कार्यालय मार्फत प्रत्यक्ष वा धारा १३७ मा व्यवस्था गरिएको सूचना कार्यालय र धारा १४० मा व्यवस्था गरिएको केन्द्रीय सूचना कार्यालय मार्फत पठाइएका उक्त सामग्रीहरू उत्पत्ति भएको देशमा र प्राप्त गर्ने

देशमा र बाटोमा पर्ने बीचका देशहरूमा सबै दस्तुरहरूबाट मुक्त हुनेछन् । यसको लागि खास गरी सन् १९४७ को विश्वव्यापी हुलाक महासन्धि र शिविर वा गैरसैनिक कारागारहरूमा बन्दी बनाइएका शत्रु राष्ट्रहरूका गैरसैनिक नागरिकहरूको पक्षमा विश्वव्यापी हुलाक संघले गरेका सम्झौताहरूद्वारा प्रदान गरिएका छुटहरू प्रस्तुत महासन्धिद्वारा संरक्षण गरिएका अरु नजरबन्दहरूको हकमा पनि विस्तार गरिनेछ । माथि उल्लेख गरिएका सम्झौताहरूमा हस्ताक्षर नगरेका देशहरू पनि उस्तै अवस्थाहरूमा दस्तुरहरू छुट दिन बाध्य हुनेछन् ।

नजरबन्दहरूका लागि पठाइएको राहत वस्तुका खेपहरू तौलको कारणले वा अन्य कुनै कारणले हुलाक कार्यालयबाट पठाउन नसकिने भए त्यसको ढुवानी खर्च कब्जा गर्ने शक्तिको अधीन भएको सबै भू-भागमा सोही शक्तिले व्यहोर्नेछ । प्रस्तुत महासन्धिका पक्ष भएका अन्य शक्तिहरूले आ-आफ्नो भू-भागमा ढुवानी खर्च बेहोर्ने छन् ।

माथिको अनुच्छेदहरूमा समाबेश हुन नसकेका यस्ता वस्तुका खेपहरूसँग सम्बन्धित ढुवानी खर्च, पठाउनेबाट असुल गरिनेछ ।

उच्च संविदाकारी पक्षहरूले सम्भव भएसम्म नजरबन्दहरूद्वारा पठाइएको वा उनीहरूको ठेगानामा पठाइएको टेलिग्रामको शुल्क घटाउने प्रयास गर्नेछन् ।

## धारा १११

यदि सम्बन्धित शक्तिहरूलाई सैनिक कारबाहीहरूले, धाराहरू १०६, १०७, १०८ र ११३ मा उल्लेख गरिएका पत्रहरू र राहत वस्तुका खेपहरू पुऱ्याउने कार्य सुनिश्चित गर्ने उनीहरूको कर्तव्य पूरा गर्न रोक लगायो भने सम्बन्धित संरक्षक शक्तिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति वा संघर्षका पक्षहरूद्वारा उचित तरीकाले स्वीकृति प्राप्त गरेका अन्य संगठनहरूले यस्ता वस्तुका खेपहरूलाई उपयुक्त साधनहरू (रेल, मोटर, गाडी, जहाज वा हवाई जहाज आदि) द्वारा पुऱ्याउने कार्य गर्नेछन् । यस उद्देश्यको लागि उच्च संविदाकारी पक्षहरूले उनीहरूलाई त्यस्ता यातायातका साधनहरू उपलब्ध गराउने र खास गरेर आवश्यक सुरक्षित आवागमनको सुविधा प्रदान गरेर यसको परिचालनको लागि अनुमति दिने प्रयास गर्नेछन् ।

यस्ता यातायातका साधनहरू देहायका सामान पुऱ्याउन प्रयोग गरिनेछन् :-

(क) पत्राचार, सूचीहरू र धारा १४० मा उल्लेख गरिएको केन्द्रीय सूचना निकाय र धारा १३६ मा उल्लेख गरिएको राष्ट्रिय कार्यालय बीच आदान-प्रदान भएका प्रतिवेदनहरू,

(ख) संरक्षक शक्तिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति अथवा नजरबन्दहरूलाई सहयोग गरिरहेको अरु कुनै संगठनले आफ्ना प्रतिनिधिहरूसँग वा संघर्षका पक्षहरूद्वारा आदान-प्रदान गरेका पत्राचार र प्रतिवेदनहरू ।

यी प्रावधानहरूले कुनै पनि हालतमा संघर्षरत पक्षहरूले यातायातका अन्य साधनहरूको व्यवस्था गर्न चाहेमा सो गर्न सक्ने निजहरूको अधिकारबाट निजहरूलाई बन्चित गर्नेछैन, न त यस्ता यातायातका साधनहरूलाई आपसी सहमति गरिएका शर्तहरूका आधारमा सुरक्षित आवागमन गर्न दिनबाट बन्चित नै गर्नेछ ।

यसरी प्रयोग गरिएका यातायातका साधनहरूको प्रयोगमा लागेको भाडा वस्तुका खेपहरूको महत्वको अनुपातमा त्यसबाट लाभान्वित हुने नागरिकहरूसँग सम्बन्धित संघर्षको पक्षहरूले व्यहोर्ने छन् ।

## धारा ११२

नजरबन्दहरूले पठाएको वा उनीहरूको नाममा प्रेषित पत्राचारको जतिसक्दो चाँडो परीक्षण गरिनेछ ।

नजरबन्दहरूका लागि पठाइएका सामग्रीहरूको खेप परीक्षण गर्दा त्यसभित्र रहेका सामानहरूमा विकृति नहुने तरिकाले गर्नुपर्छ । यस्तो जाँच प्राप्तकर्ता वा उसले रीतपूर्वक खटाएको सह-नजरबन्दको समुपस्थितिमा गरिनेछ । व्यक्तिगत वा सामूहिक सामग्रीहरूको खेप नजरबन्द कहाँ पुऱ्याउने काम परीक्षणमा कठिनाई भएको बहानामा ढिलाई गरिने छैन ।

संघर्षका पक्षहरूले सैनिक वा राजनीतिक कारणबाट पत्राचारमा लगाएको कुनै पनि प्रतिबन्ध अस्थायी हुनेछ र यसको समयावधी सम्भव भएसम्म छोटो हुनेछ ।

## धारा ११३

कब्जा गर्ने शक्तिले संरक्षक शक्ति वा धारा १४० मा प्रावधान गरिएको केन्द्रिय निकाय मार्फत वा अन्यथा आवश्यकता भए अनुसार नजरबन्दहरूले पठाएका वा उनीहरूलाई पठाइएका इच्छापत्र, वारेसनामा, अधिकारनामा वा अरु कुनै कागजपत्रको प्रेषणको लागि सबै उचित सुविधाहरू प्रदान गर्नेछ ।

सबै अवस्थाहरूमा कब्जा गर्ने शक्तिले नजरबन्दहरूको निम्ति खास गरी तिनीहरूलाई वकिलसँग परामर्श गर्न स्वीकृति दिएर, यस्ता कागजपत्रहरू रीतपूर्वक कानुनी रुपमा तयारगर्न र प्रमाणिकरण गर्न सुविधा पुऱ्याउनेछ ।

## धारा ११४

कब्जा गर्ने शक्तिले नजरबन्दहरूलाई उनीहरूको सम्पत्तिको व्यवस्था गर्न सबै सुविधाहरू पुऱ्याउनेछ तर यो नजरबन्दको शर्तसँग र लागू हुने कानुनसँग नमिल्ने खालको हुनेछैन । यो उद्देश्यको लागि उक्त शक्तिको जरुरी अवस्थामा र परिस्थितिहरूले अनुमति दिएमा उनीहरूलाई नजरबन्दको स्थान छोड्न अनुमति दिन सक्नेछ ।

## धारा ११५

एउटा नजरबन्द कुनै मुद्दाको कारबाहीको पक्ष भएका सबै अवस्थाहरूमा यदि उसले अनुरोध गरेमा कब्जा गर्ने शक्तिले अदालतलाई उसको नजरबन्दको बारेमा जानकारी गराउनेछ र उसको नजरबन्दको कारणले उसको मुद्दाको तयारी र संचालनको सम्बन्धमा अथवा अदालतको कुनै फैसलाको कार्यान्वयनको सम्बन्धमा उसलाई कुनै किसिमको प्रतिकुल असर नपरोस् भन्ने उद्देश्यले कानुनी परिधिभित्र रही सबै आवश्यक उपायहरू गरिएको छ भन्ने बारे सुनिश्चित गर्नेछ ।

## धारा ११६

प्रत्येक नजरबन्दलाई आगन्तुकहरू र खास गरी नजिकका नातेदारहरूसँग नियमित समयावधिको अन्तरालमा र सम्भव भएसम्म पटक पटक भेट्न अनुमति दिइनेछ ।

सम्भव भएसम्म अत्यावश्यक अवस्थाहरूमा, खास गरी आफन्तहरूको मृत्यु वा गम्भीर बिरामीको अवस्थामा, उनीहरूलाई आफ्नो घर जान अनुमति दिइनेछ ।

# परिच्छेद ९

# दण्डात्मक र अनुशासनात्मक सजायहरू

## धारा ११७

यस परिच्छेदका प्रावधानहरूको अधीन रही उनीहरू थुनिएको भू-भागमा लागू भएका कानुनहरू नजरबन्दको समयमा कसुर गर्ने नजरबन्दहरूको हकमा पनि लागू भइरहनेछ ।

यदि सामान्य कानुनहरू, नियमहरू र आदेशहरू अनुसार नजबरन्दले गरेको काम सजायभागी रहेको छ तर, सोही कामहरू नजरबन्द नभएको मानिसहरूले गरेमा सजायभागी हुँदैनन् भने त्यस्ता कामहरूका लागि अनुशासनात्मक कारबाही मात्र गरिनेछ ।

कुनै पनि नजरबन्दलाई सोही कार्यको लागि वा सोही कसुरमा एक पटकभन्दा बढी सजाय गरिनेछैन ।

## धारा ११८

अदालत वा अधिकारीहरूले सजाय गर्दा सम्भव भएसम्म विपक्षी कब्जा गर्ने शक्तिको नागरिक होइन भन्ने तथ्यलाई ध्यान दिनेछन् । नजरबन्दहरूलाई अभियोग लगाइएको कसुरको लागि तोकिएको सजाय घटाउन तिनीहरू स्वतन्त्र हुनेछन् र यस सम्बन्धमा तोकिएको न्यूनतम सजाय गर्न बाध्य हुने छैनन् ।

सूर्यको प्रकाश नपुग्ने परिसरहरूमा नजरबन्द गर्न र सामान्यतया सबै प्रकारको क्रूरता, विना कुनै अपवाद निषेधित छन् ।

अनुशासनात्मक वा न्यायिक सजाय भोगेका नजरबन्हरूलाई अन्य नजरबन्दहरूभन्दा पृथक तरिकाले व्यवहार गरिनेछैन ।

कुनै नजरबन्दले सुरक्षात्मक नजरबन्दीमा बिताएको अवधि उसलाई कैद हुने गरी हुन सक्ने अनुशासनात्मक वा न्यायिक सजायबाट कट्टा गरिनेछ ।

नजरबन्दहरूका विरुद्ध गरिएका सबै न्यायिक कारबाहीहरू र त्यसका परिणामहरूबारे उनीहरूलाई प्रतिनिधित्व गर्ने नजरबन्दहरूको समितिलाई सूचित गरिनेछ ।

## धारा ११९

नजरबन्दहरूलाई लागू हुने अनुशासनात्मक सजायहरू निम्न बमोजिम हुनेछन् :-

(१) नजरबन्दको तीस दिनभन्दा बढी नहुने अवधिको लागि धारा ९५ अन्तरगतका प्रावधानहरू अन्तरगत सामान्यतया प्राप्त गर्ने ज्यालाको ५० प्रतिशतभन्दा बढी नहुने जरिवाना,

(२) प्रस्तुत महासन्धिमा प्रावधान गरिएको व्यवहारका अतिरिक्त यसद्वारा प्रदान गरिएका सुविधाहरूमा रोक,

(३) नजरबन्दको स्थानको मर्मत सम्भारसँग सम्बन्धित दिनमा २ घण्टाभन्दा बढी नहुने गरी गरिने थकाई लाग्ने किसिमको काम,

(४) कैद

अनुशासनात्मक दण्डहरू कुनै पनि अवस्थामा अमानवीय, पाशविक अथवा नजरबन्दहरूको स्वास्थ्यको लागि खतरनाक हुनेछैनन् । नजरबन्दहरूको उमेर, लिंग र स्वास्थ्यको अवस्थालाई ध्यानमा राखिनेछ ।

परस्परमा सम्बद्ध भएका वा नभएका अनुशासनका थुप्रै उल्लंघनहरूको लागि कुनै नजरबन्द जिम्मेवार भएको भएपनि, उसको मुद्दाको सुनुवाई हुँदा एउटा सिंगो सजायको अवधि कुनै पनि अवस्थामा लगातार तीस दिनभन्दा बढी हुने छैन ।

## धारा १२०

भागेपछि समातिएका वा भाग्ने उद्योग गर्दा समातिएका नजरबन्दहरू यद्यपि सो कसुर दोहोरिएको भए पनि सो कार्यको लागि अनुशासनात्मक सजायको मात्र भागीदार हुनेछन् ।

धारा ११८ को अनुच्छेद ३ मा जेसुकै लेखिएको भए पनि, भागेको वा भाग्ने प्रयास गरेको परिणामस्वरुप सजाय भएको नजरबन्दहरूलाई, विशेष निगरानीमा राख्न सकिनेछ । तर त्यस्तो निगरानीले उनीहरूको स्वास्थ्यको अवस्थामा असर पार्नु हुँदैन । यो नजरबन्दको ठाउँमै गरिन्छ र यसले प्रस्तुत महासन्धिले प्रदान गरेका कुनै पनि सुरक्षाहरूलाई उन्मूलन गर्दैन ।

भाग्न वा भाग्न उद्योग गर्न, सहयोग वा उत्साहित गर्ने नजरबन्दहरूको यस्तो कार्यको लागि उनीहरू अनुशासनात्मक सजायका मात्र भागी हुनेछन् ।

## धारा १२१

कुनै नजरबन्दलाई निजले पलायनको अवस्थामा गरेको कसुरको लागि अभियोजन गर्दा यद्यपि दोहोरिएको कसुर भए पनि भागेको वा भाग्ने उद्योगलाई कसुर बढाउने अवस्थाको रुपमा मानिनेछैन ।

कुनै कसुरको लागि, खास गरी सफल वा असफल पलायनको सिलसिलामा गरेको कार्यको लागि दिनुपर्ने सजाय अनुशानात्मक वा न्यायिक कस्तो प्रकृतिको हुनेछ भनी निर्णय गर्दा सक्षम अधिकारीहरूले उदारता देखाउने छन् भन्ने कुरा संघर्षका पक्षहरूले सुनिश्चित गर्नेछन् ।

## धारा १२२

अनुशासनको विरुद्ध हुने कसुरहरू बारे तुरुन्त अनुसन्धान गरिनेछ । यो नियम खासगरी भागेको वा भाग्ने उद्योग गरेको अवस्थामा लागू हुनेछ । पुनः समातिएका नजरबन्दहरूलाई जति सक्दो चाँडो सक्षम अधिकारी समक्ष प्रस्तुत गरिनेछ ।

अनुशासन विरुद्धको कसुर हुने मुद्दामा सबै नजरबन्दहरूको लागि पुर्पक्षको प्रतिक्षामा कैदमा बस्नु पर्ने कुनै पूर्णतया कम गरिनेछ र त्यो चौध दिनभन्दा बढी हुनेछैन । यस अवधिलाई काराबासको कुनै पनि सजायबाट घटाइनेछ ।

धारा १२४ र १२५ का प्रावधानहरू अनुशासन विरुद्धको कसुरमा पुर्पक्षको लागि पर्खिरहेका नजरबन्दहरूको हकमा लागू हुनेछन् ।

## धारा १२३

अदालतहरू र उच्च अधिकारीहरूको क्षमताप्रति कुनै पूर्वाग्रह विना नजरबन्दको ठाउँको नियन्त्रण गर्ने समादेशक वा उसलाई प्रतिस्थापित गर्ने जिम्मेवार अधिकृत वा अधिकारी अथवा उसले आफ्नो अनुशासनात्मक अधिकार प्रत्यायोजित गरेको व्यक्तिले मात्र अनुशासनको सजायको आदेश दिन सक्नेछ ।

कुनै अनुशासनात्मक सजाय दिनुभन्दा पहिले अभियुक्त नजरबन्दलाई उसलाई लगाइएको दोषको बारेमा स्पष्ट सूचना दिइनेछ र आफ्नो आचरणबारे स्पष्ट गर्ने र आफ्नो प्रतिरक्षा गर्ने अवसर प्रदान गरिनेछ । उसलाई आफ्नो साक्षीहरू बोलाउन र सहायता लिन यदि आवश्यक भएमा योग्य दोभाषेको सेवा लिन अनुमति दिइनेछ । अभियुक्तको र नजरबन्दहरूको समितिको एक सदस्यको उपस्थितिमा फैसला सुनाइनेछ ।

अनुशासनात्मक सजाय र यसको कार्यान्वयनको बीचको अवधि १ महिनाभन्दा बढी हुनेछैन ।

यदि कुनै नजरबन्दहरूलाई अन्य थप अनुशासनात्मक सजाय दिइयो भने र यदि ती मध्ये एकको अवधि दश दिन वा सोभन्दा बढी छ भने, ती दुईमध्ये कुनै एक सजायको कार्यान्वयन गर्दा ती दुईको बीचमा कम्तीमा तीन दिनको अवधि भुक्तान हुनुपर्छ ।

नजरबन्दीको स्थानको नियन्त्रण गर्ने समादेशकले अनुशासनात्मक सजायको अभिलेख राख्नेछ र यो संरक्षक शक्तिका प्रतिनिधिहरूका लागि निरीक्षणको लागि खुल्ला हुनेछ ।

## धारा १२४

नजरबन्दहरूलाई कुनै पनि अवस्थामा अनुशासनात्मक सजाय भोग्नका लागि कारागार सम्बन्धी संस्थापनहरू (जेलहरू, सुधारक कारागारहरू, दोषी ठहरिएकाहरूको जेल आदि) मा स्थानान्तरण गरिनेछैन ।

अनुशासनात्मक सजाय भोग्नु पर्ने परिसरहरूमा सरसफाईका आवश्यकताहरू अनुकूल हुन्छन्, तिनीहरूलाई खास गरी पर्याप्त ओछ्यान उपलब्ध गराइनेछ । सजाय भोगिरहेका नजरबन्दहरूलाई आफूलाई स्वच्छ अवस्थामा रहन सक्ने बनाइनेछ ।

अनुशासनात्मक सजाय भोगिरहेका नजरबन्द महिलाहरूलाई नजरबन्दहरू भन्दा छुट्टै कोठामा राखिनेछ र तिनीहरू महिलाकै प्रत्यक्ष सुपरीवेक्षणमा हुनेछन् ।

## धारा १२५

अनुशासनको सजाय पाएका नजरबन्दहरूलाई कम्तीमा दिनको २ घण्टा खुल्ला हावामा बस्ने र व्यायाम गर्ने अनुमति दिइनेछ।

उनीहरूले अनुरोध गरेमा उनीहरूलाई दैनिक स्वास्थ्य परीक्षणको लागि उपस्थिति हुने अनुमति दिइनेछ । उनीहरूले, उनीहरूको स्वास्थ्यको अवस्थालाई चाहिएको हेरचाह प्राप्त गर्नेछन् र आवश्यक परेमा उनीहरूलाई नजरबन्दको ठाउँको चिकित्सालय वा अस्पतालमा लगिनेछ।

उनीहरूलाई पढ्न र लेख्न, त्यसै गरी पत्र पठाउन र प्राप्त गर्न अनुमति हुनेछ। तर उनीहरूको सजाय भुक्तान नभएको समयावधिभर तिनीहरूबाट पुलिन्दा र रुपैयाँ पैसाको भुक्तानी रोकिन सक्नेछ, यस्ता सामग्रीहरूको खेप सो समयमा नजरबन्दी समितिलाई दिइनेछ, जसले पार्सलमा भएका नाशवान सामानहरू चिकित्सालयलाई हस्तान्तरण गर्नेछ।

अनुशासनको सजाय दिइएको कुनै पनि नजरबन्दहरूलाई प्रस्तुत महासन्धिका धाराहरू १०७ र १४३ का प्रावधानहरूको लाभबाट बञ्चित गर्न सकिने छैन।

## धारा १२६

धारा ७१ देखि ७६ सम्ममा व्यवस्था गरिएका सम्पूर्ण प्रावधानहरू कब्जा गर्ने शक्तिको राष्ट्रिय भू-भागमा भएका नजरबन्दहरूको विरुद्ध गरिने कारबाहीको हकमा समान रुपले लागू हुनेछन्।

# परिच्छेद १०

# नजरबन्दहरूको स्थानान्तरण

## धारा १२७

नजरबन्दहरूको स्थानान्तरण जहिले पनि मानवोचित तरिकाले गरिनेछ। सामान्य नियमको रुपमा यसलाई रेल वा यातायातका अन्य साधनहरूबाट गरिनेछ र कम्तिमा पनि कब्जा गर्ने शक्तिहरूको फौजको स्थान परिवर्तन गर्दा रहने अवस्था सरहको अवस्थामा गरिनेछ। यदि यस्तो कार्य अपवादात्मक उपायको रुपमा, पैदल यात्राद्वारा गर्नुपर्‍यो भने नजरबन्दहरू त्यसको लागि ठिक स्वास्थ्य स्थितिमा नभएसम्म गरिनेछैन र उनीहरूलाई कुनै पनि अवस्थामा अधिक थकाइ लाग्ने गरी गरिने छैन।

स्थानान्तरणको समयमा कब्जा गर्ने शक्तिले नजरबन्दहरूलाई राम्रो स्वास्थ्यमा राख्न पर्याप्त हुने गरी गुणस्तर, मात्रा र विभिन्न प्रकारका खाद्यान्न तथा खानेपानीका साथै आवश्यक कपडा, पर्याप्त आश्रय र आवश्यक औषधि उपचारको आपूर्ति गर्नेछ। कब्जा गर्ने शक्तिले स्थानान्तरणको समयमा

उनीहरूको सुरक्षा सुनिश्चित गर्न सम्पूर्ण उपयुक्त पूर्व सावधानी लिनेछ र उनीहरूको प्रस्थानभन्दा अगाडि स्थानान्तरण गरिने सबै नजरबन्दहरूको पूर्ण सूची तयार गर्नेछ ।

उनीहरूको सुरक्षाको दृष्टिकोणले तुरुन्त सार्न अनिवार्य नठहरिएसम्म बिरामी, घाइते वा अशक्त नजरबन्दहरू र प्रसूतिका बिरामीहरूलाई तिनीहरूको स्वास्थ्यको लागि यात्रा गम्भीर रुपमा हानिकारक हुने भएमा स्थानान्तरण गरिने छैन ।

यदि युद्ध क्षेत्र नजरबन्दहरूको ठाउँ नजिक आइपुगेमा सो ठाउँमा रहेका नजरबन्दहरूलाई पर्याप्त सुरक्षाको अवस्थामा हटाउने कार्य गर्न नसकेसम्म वा स्थानान्तरण गर्नुभन्दा सो ठाउँमा रही रहँदा उनीहरूलाई खतरा हुने सम्भावना बढी नभएसम्म उनीहरूलाई स्थानान्तरण गरिनेछैन ।

नजरबन्दहरूको स्थानान्तरण सम्बन्धी निर्णय गर्दा कब्जा गर्ने शक्तिले उनीहरूको हितलाई विचार पुऱ्याउने छ र खास गरेर उनीहरूलाई स्वदेश फिर्ता गर्दा वा उनीहरूलाई आफ्नो घरमा फर्काउँदा कठिनाइहरू बढाउने कुनै पनि काम गर्ने छैन ।

## धारा १२८

स्थानान्तरण गर्दा नजरबन्दहरूलाई उनीहरूको प्रस्थानको बारेमा पत्राचार गर्ने नयाँ ठेगानाको बारेमा आधिकारिक जानकारी दिइनेछ । यस्तो सूचना उनीहरूको लत्ताकपडा पोका पार्न र आफन्तहरूलाई खबर गर्न सक्ने गरी दिइनेछ ।

उनीहरूलाई आफ्ना व्यक्तिहरू सामानहरू र उनीहरूकहाँ आइपुगेका पत्राचारहरू र पुलिन्दाहरू लैजान अनुमति दिइनेछ । यदि स्थानान्तरणको अवस्थाले आवश्यक भएमा यस्तो गुण्टाको तौल सीमित गर्न सकिनेछ तर कुनै पनि अवस्थामा प्रत्येक नजरबन्दको लागि २५ किलोभन्दा कम हुनेछैन ।

उनीहरूको अघिल्लो नजरबन्दको ठेगानामा पठाइएका पत्र र पार्सलहरू अविलम्ब उनीहरूकहाँ पठाइनेछ ।

नजरबन्दको स्थानको अधिकारी समादेशकले दोस्रो अनुच्छेदमा लगाइएका बन्देजहरूको परिणामस्वरुप नजरबन्दहरूले आफूसँग लग्न नसकेका आफ्ना गुण्टा र सामुदायिक सम्पत्तिको परिवहन सुनिश्चित गर्नको लागि नजरबन्द समितिसँग सहमति गरी आवश्यक जुनसुकै उपायहरू गर्नेछ ।

# परिच्छेद ११

# मृत्यु

## धारा १२९

नजरबन्दहरूका वसियत (इच्छापत्र) हरू जिम्मेवार पदाधिकारीहरूद्वारा सुरक्षित राख्न ग्रहण गरिनेछ र कुनै नजरबन्दको मृत्यु भएमा उसको वसियत (इच्छापत्र), निजले पहिले नै तोकेका व्यक्तिसम्म अविलम्ब पुऱ्याइनेछ।

प्रत्येक नजरबन्दको मृत्यु चिकित्सकद्वारा प्रमाणित गरिनेछ र मृत्युको कारण र त्यो कुन अवस्थामा भएको हो सो दर्शाउँदै मृत्यु प्रमाणपत्र बनाइनेछ।

रीतपूर्वक दर्ता भएको मृत्युको आधिकारिक अभिलेख नजरबन्दको स्थान अवस्थित रहेको भू-भागमा लागू रहेको सम्बन्धित विधि अनुसार तयार गरिनेछ र यस्तो अभिलेखको रीतपूर्वक प्रमाणित गरिएको प्रतिलिपि अविलम्ब संरक्षक शक्ति र धारा १४० मा उल्लिखित केन्द्रीय समितिमा पठाइनेछ।

## धारा १३०

कब्जा गर्ने अधिकारीहरूले नजरबन्दको समयमा मृत्यु हुने नजरबन्दहरूलाई सम्मानका साथ र सम्भव भएमा, उनीहरू जुन धर्मसँग सम्बन्धित छन् सोही रीतिरिवाज अनुसार गाडिनेछ र उनीहरूका चिहानलाई सम्मान गरिनेछ, ठिकसँग मर्मत सम्भार गरिनेछ  र सधैँ पहिचान हुने तरिकाले चिन्हित गरिनेछन् भन्ने कुरा सुनिश्चित गर्नेछन्।

अपरिहार्य परिस्थितिका कारण सामूहिक चिहानको प्रयोग आवश्यक परेमा बाहेक मृत नजरबन्दहरूलाई व्यक्तिगत चिहानमा गाडिनेछ। मृत शरीरलाई स्वास्थ्य, मृत व्यक्तिको धर्म र यस सम्बन्धी उसले व्यक्त गरेको इच्छा जस्ता आवश्यक कारणले मात्र जनाइनेछ। लासलाई जलाइएको अवस्थामा सोबारे तथ्य र कारणहरू मृतकको मृत्यु प्रमाणपत्रमा उल्लेख गरिनेछ। कब्जा गर्ने अधिकारीहरूद्वारा सुरक्षा साथ अस्तु (खरानी) राखिनेछ र उनीहरूको अनुरोधमा नजिकको नातेदारलाई जतिसक्दो चाँडो हस्तान्तरण गरिनेछ।

परिस्थितिले अनुमति दिनासाथ र लडाइँ बन्द हुनुभन्दा पहिले कब्जा गर्ने शक्तिले मृत नजरबन्दहरू जुन शक्तिमाथि आश्रित छन् त्यस शक्तिलाई मृतक नजरबन्दहरूको सूची धारा १३७ मा उल्लिखित सूचना कार्यालय मार्फत पठाउनेछ। यस्तो सूचीमा मृतक नजरबन्दहरूको पहिचानको लागि आवश्यक सबै विवरणहरूका साथै, उनीहरूको चिहान राखिएको ठिक स्थानको सूचना समावेश गरिनेछ।

## धारा १३१

सुरक्षा पहरेदार, अर्को नजरबन्द र अन्य कुनै व्यक्तिद्वारा गराइएको वा गराइएको शंका गरिएको प्रत्येक मृत्यु अथवा गम्भीर चोटको साथै कारण थाहा नभएका मृत्युबारे कब्जा गर्ने शक्तिले तत्काल आधिकारिक जाँचबुझ गर्नेछ।

यस विषयको सूचना तुरुन्तै संरक्षक शक्तिलाई पठाइनेछ । कुनै पनि प्रत्यक्षदर्शीको प्रमाण बुझिनेछ र यस्ता प्रमाणसहितको प्रतिवेदन तयार गरिनेछ र उल्लिखित संरक्षक शक्तिसमक्ष पठाइनेछ ।

यदि सोधपुछले एक वा एकभन्दा बढी व्यक्तिको दोष देखाउँछ भने कब्जा गर्ने शक्तिले जिम्मेवार व्यक्ति वा व्यक्तिहरूको अभियोजनलाई सुनिश्चित गर्नका लागि सम्पूर्ण आवश्यक कदम चाल्नेछ।

## परिच्छेद १२
## रिहाइ, स्वदेश फिर्ता र तटस्थ देशमा बसोबास
## धारा १३२

नजरबन्द गर्नुपर्ने कारण नरहनासाथ कब्जा गर्ने शक्तिद्वारा यथाशिघ्र प्रत्येक नजरबन्दलाई रिहाइ गरिनेछ।

यसका अतिरिक्त संघर्षरत पक्षहरूले लडाइँ अवधिमा, निश्चित वर्गका नजरबन्दहरू खासगरी केटाकेटी, गर्भवती महिला र शिशु तथा कलिला केटाकेटीका आमाहरू, बिरामी र घाइते र लामो समयदेखि थुनिएका नजरबन्दहरूको रिहाइ, स्वदेश फिर्ता, आवासको स्थानमा वापसी वा कुनै तटस्थ राष्ट्रमा बसोबास गराउने सम्बन्धमा सम्झौता गर्न सक्नेछन् ।

## धारा १३३

लडाइँको अन्त्य हुनासाथ यथासम्भव चाँडो नजरबन्द समाप्त हुनेछ।

संघर्षरत कुनै पक्षको भू-भागमा भएका नजरबन्दहरूलाई, जसको विरुद्धमा पूर्णतया अनुशासनात्मक दण्ड मात्र हुन नसक्ने खालको कसुरको लागि दण्डात्मक कारबाही लम्बिएको हुन्छ, त्यस्तो कारबाही समाप्त नहुञ्जेलसम्म र यदि परिस्थितिले आवश्यक ठानेमा त्यो दण्ड भुक्तान नहुञ्जेलसम्म थुनामा राख्न सकिन्छ । स्वतन्त्रताबाट बञ्चित हुने गरी पहिले नै दण्डको सजाय तोकिएका नजरबन्दहरूको हकमा पनि यहि लागू हुनेछ।

लडाइँको वा भू-भागहरू कब्जाको अन्त्य भइसकेपछि तितरबितर भएका नजरबन्दहरूको खोजी गर्नको लागि कब्जा गर्ने शक्ति र सम्बन्धित शक्तिहरूको बीच सम्झौताद्वारा समितिहरूको स्थापना गर्ने सकिनेछ ।

## धारा १३४

लडाइँ वा कब्जाको अन्त्य भैसकेपछि उच्च संविदाकारी पक्षहरूले सबै नजरबन्दहरूलाई उनीहरू बसेको अन्तिम ठाउँमा फिर्ता गर्ने वा स्वदेश फिर्ता गर्ने काम सहज गर्नका लागि प्रयास गर्नेछन् ।

## धारा १३५

कब्जा गर्ने शक्तिले रिहा भएका नजरबन्दहरूलाई नजरबन्द हुँदाको समयमा उनीहरू रहेको स्थानमा नै निजहरूलाई फिर्ता गर्दा लाग्ने खर्च व्यहोर्ने छन् अथवा यदि उनीहरूलाई, बाटोमा रहँदा वा उच्च समुन्द्रमा हुँदा कब्जा गर्ने शक्तिले समातेको भए, उनीहरूको यात्रा पूरा गर्दा लाग्ने खर्च वा तिनीहरू जुन स्थानबाट ल्याइएका हुन् सोही स्थानसम्म फर्कने खर्च उक्त शक्तिले व्यहोर्नेछ ।

कब्जा गर्ने शक्तिको भू-भागमा पहिले स्थायी बसोबास रहेका नजरबन्दलाई सो शक्तिले उसको भू-भागमा बस्ने अनुमति दिन इन्कार गऱ्यो भने त्यस्तो कब्जा गर्ने शक्तिले उल्लिखित नजरबन्दको स्वदेश फिर्ताको लागि लाग्ने खर्च व्यहोर्ने छ । तर यदि नजरबन्दले आफ्नै उत्तरदायित्वमा स्वदेश फर्कने चाहना राख्छ वा आफ्नो निष्ठा रहेको सरकारप्रतिको आत्राकारिताले आफ्नै देश फर्कने निर्णय गर्छ भने कब्जा गर्ने शक्तिले आफ्नो भू-भागको उसको प्रस्थान विन्दुभन्दा अगाडिको उसको यात्राको लागि खर्च व्यहोर्नु पर्दैन । कब्जा गर्ने शक्तिले आफ्नै अनुरोधमा नजरबन्द बनाइएको कुनै नजरबन्दको फिर्ताको खर्च व्यहोर्नु पर्दैन ।

यदि नजरबन्दहरू धारा ४५ अनुसार स्थानान्तरण भएका रहेछन् भने स्थानान्तण गर्ने र ग्रहण गर्ने शक्तिहरू मध्ये हरेकले व्यहोर्ने खर्चको भागबारे सहमति हुन सक्नेछ ।

माथि उल्लिखित कुराले शत्रुको हातमा भएका उनीहरूका नागरिकहरू फिर्ता गर्नेबारे संघर्षका पक्षहरूबीच सम्पन्न हुने सक्ने विशेष सम्झौताहरू माथि प्रतिकूल असर पार्ने छैन ।

## खण्ड ५

## सूचना कार्यालय र केन्द्रीय निकाय

### धारा १३६

संघर्षको शुरुआत हुनासाथ र कब्जाका सबै अवस्थाहरूमा संघर्षरत प्रत्येक पक्षले आफ्नो अधिकारमा भएका संरक्षित व्यक्तिहरूबारे सूचना प्राप्त गर्ने र पठाउने जिम्मेवारी भएको एउटा आधिकारिक सूचना कार्यालयको स्थापना गर्नेछ ।

संघर्षरत प्रत्येक पक्षले सम्भव भएसम्मका सबभन्दा छोटो समयमा दुई हप्ताभन्दा बढी समयदेखि हिरासतमा राखिएका, तोकिएको निवासमा राखिएका वा नजरबन्दमा राखिएका संरक्षित व्यक्तिहरूको सम्बन्धमा यसले अपनाएका कुनै पनि उपायहरूबारे जानकारी आफ्नो सूचना कार्यालयलाई दिनेछ । यसका अतिरिक्त यसले यस्ता विषयहरूसँग सम्बन्धित आफ्ना विभिन्न विभागहरूबाट संरक्षित व्यक्तिहरूसँग सम्बन्धित सबै फेरबदलहरू, जस्तै स्थानान्तरण, छुटकारा, स्वदेश वापसी, पलायन, अस्पताल भर्ना, जन्म र मृत्युबारे तदारुकता साथ माथि उल्लिखित कार्यालयलाई सूचना दिने अपेक्षा गर्नेछ ।

### धारा १३७

प्रत्येक राष्ट्रिय कार्यालयले, संरक्षित व्यक्तिहरू सम्बन्धी समाचार उनीहरू नागरिक भएको शक्ति वा जसको भू-भागमा उनीहरू बसेका छन् ती शक्तिहरूलाई संरक्षक शक्तिहरूको मध्यस्थ मार्फत र धारा १४० मा व्यवस्थित राष्ट्रिय निकायहरू मार्फत सबैभन्दा छिटो माध्यमद्वारा पठाउनेछ । सो कार्यालयले संरक्षित व्यक्तिहरू सम्बन्धी प्राप्त भएका सबै जिज्ञासाहरूको पनि उत्तर दिनेछ ।

सूचना कार्यालयहरूले संरक्षक व्यक्ति सम्बन्धी सूचना सम्बन्धित व्यक्ति वा उसका आफन्तहरूलाई हानिकारक नहुने विश्वास भएपछि संप्रेषण गर्नेछ । यस्तो अवस्थामा पनि केन्द्रिय निकायबाट सूचना रोक्का गरिनेछैन, तर परिस्थितिहरूबारे सूचना पाएपछि धारा १४० मा निर्दिष्ट आवश्यक पूर्व सतर्कता भने अपनाउनेछ ।

कुनै कार्यालयले लिखित रुपमा पठाएका संचारहरू हस्ताक्षर गरेर वा छापद्वारा प्रमाणित गरिनेछन् ।

### धारा १३८

राष्ट्रिय कार्यालयले प्राप्त गरेका र यसले संप्रेषण गरेका सूचनाहरू संरक्षित व्यक्तिको दुरुस्त पहिचान गर्न सकिने र उसको नजिकको नातेदारलाई तुरुन्त सल्लाह दिन सम्भव हुने प्रकृतिका हुनेछन् । त्यस सूचनामा प्रत्येक व्यक्तिको सम्बन्धमा कम्तिमा उसको थर, पहिलो नाम, जन्म

मिति र स्थान, राष्ट्रियता, अन्तिम निवास स्थान र विशिष्ट विशेषताहरू जस्तै पिताको पहिलो नाम र आमाको अविवाहित अवस्थाको नाम, उक्त व्यक्तिका सम्बन्धमा गरिएको कारबाहीको मिति, स्थान र प्रकृति, उसलाई पत्राचार गर्न सकिने ठेगाना र सूचना गर्नुपर्ने व्यक्तिको नाम र ठेगाना समावेश हुनेछन् ।

त्यसैगरी, गम्भीर बिरामी भएका अथवा गम्भीर घाइते भएका नजरबन्दहरूको स्वास्थ्यको अवस्था सम्बन्धी सूचना नियमित रुपमा र यदि सम्भव भएमा प्रत्येक हप्ता उपलब्ध गराइनेछ ।

## धारा १३९

यसका अतिरिक्त प्रत्येक राष्ट्रिय सूचना कार्यालय, धारा १३६ मा उल्लिखित संरक्षित व्यक्तिहरूले, खास गरेर स्वदेश फिर्ता गरिएका वा मुक्त गरिएका वा भागेका वा मरेको व्यक्तिहरूले छाडेका सबै व्यक्तिगत मूल्यवान वस्तुहरू संकलन गर्न जिम्मेवार हुनेछ । यसले उक्त बहुमूल्य वस्तुहरू प्रत्यक्ष रुपले वा यदि आवश्यक भएमा केन्द्रीय निकायहरूद्वारा सम्बन्धित व्यक्तिहरूलाई पठाउनेछ । कार्यालयद्वारा यस्ता वस्तुहरू लाहाछाप लागेका पोकाहरूमा पठाइनेछ साथै जोसँग ती सामग्रीहरू सम्बन्धित छन् त्यस व्यक्तिको स्पष्ट र पूर्ण पहिचान हुने विवरण र पुलिन्दामा भएका सामग्रीहरूको पूर्ण सूची समावेश गरिनेछ । यस्ता सबै मूल्यवान सामग्रीहरू पठाएको र प्राप्त गरेको विस्तृत अभिलेख राखिनेछ ।

## धारा १४०

संरक्षित व्यक्तिहरूका खासगरी नजरबन्दहरूको लागि तटस्थ देशमा एउटा केन्द्रीय सूचना निकायको स्थापना गरिनेछ । रेडक्रसको अन्तर्राष्ट्रिय समितिले यदि आवश्यक ठानेमा, सम्बन्धित शक्तिहरू समक्ष यस्तो निकायको गठनबारे प्रस्ताव गर्न सक्नेछ जुन युद्धबन्दीहरूको उपचार सम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा १२३ मा प्रावधान गरिए जस्तै हुन सक्छ ।

सो निकायको कार्य यसले आधिकारिक वा व्यक्तिगत माध्यमद्वारा प्राप्त गर्न सक्ने धारा १३६ मा उल्लिखित प्रकारका सबै सूचना संकलन गर्नु वा त्यस्तो सूचना सम्बन्धित व्यक्तिहरूको जन्म भएको वा बसोबास गरेको देशलाई जति सक्दो छिटो पठाउनु हुनेछ । अपवादका रुपमा, सूचनासँग सम्बन्धित व्यक्तिहरूलाई वा तिनीहरूको आफन्तहरूलाई त्यस्तो सूचना संप्रेषण हानिकारक भएमा सो पठाइनेछैन । यस निकायले संघर्षका पक्षहरूबाट यस्तो संप्रेषणहरू गर्न सबै मुनासिब सुविधाहरू पाउनेछ ।

उच्च संविदाकारी पक्षहरूलाई र खासगरी जसका नागरिकहरू त्यस्तो केन्द्रीय निकायको सेवाबाट लाभान्वित हुन्छन्, तिनीहरूलाई उल्लिखित निकायलाई आवश्यक पर्ने आर्थिक सहयोग गर्न अनुरोध गरिन्छ।

यस अघिका उल्लिखित प्रावधानहरूलाई कुनै पनि तरिकाले रेडक्रसको अन्तर्राष्ट्रिय समितिको र धारा १४२ मा वर्णित सहायता कार्य गर्ने संस्थाहरूको मानवीय क्रियाकलापहरूलाई सीमित पार्ने गरी व्याख्या गरिने छैन।

## धारा १४१

राष्ट्रिय सूचना कार्यालय र केन्द्रीय सूचना निकायले सबै चिठ्ठीपत्रहरू निःशुल्क पठाउन पाउनेछन् र त्यसैगरी धारा ११० मा उल्लिखति छुटहरू र त्यस्तै सम्भव भएसम्म टेलिग्राफिक खर्चको छुटहरू वा कम्तिमा पनि बढी मात्रामा घटाइएको दर उपभोग गर्न पाउनेछन्।

## भाग ४

## महासन्धिको कार्यान्वयन

## खण्ड १

## सामान्य प्रावधानहरू

## धारा १४२

कब्जा गर्ने शक्तिले उनीहरूको सुरक्षा सुनिश्चित गर्नका लागि वा अरु कुनै मुनासिव आवश्यकतालाई पूर्ति गर्नका लागि अत्यावश्यक ठानेका उपायहरूको अधीनमा रही धार्मिक संस्थाहरू, सहायता कार्य गर्ने संस्थाहरू वा संरक्षित व्यक्तिहरूलाई सहयोग गर्ने अन्य कुनै संगठनहरूले आफैले वा उनीहरूले रीतपूर्वक आधिकारिक मान्यता प्राप्त गरेका प्रतिनिधिहरूले संरक्षित व्यक्तिहरूलाई भेट गर्नको लागि शैक्षिक, मनोरञ्जनात्मक वा धार्मिक उद्देश्यहरूको लागि, कुनै पनि स्रोतबाट प्राप्त राहत आपूर्ति र सामग्री वितरण गर्नको लागि वा नजरबन्दको स्थानभित्र उनीहरूको फुर्सदको समयलाई संगठित गर्न सहयोग गर्नको लागि ती शक्तिहरूबाट सबै सुविधाहरू प्राप्त गर्नेछन्। यस्ता संस्थाहरू वा संगठनहरू कब्जा गर्ने शक्तिको भू-भागमा वा अन्य कुनै देशमा गठन गर्न सकिने छ वा तिनीहरू अन्तर्राष्ट्रिय चरित्रका हुन सक्नेछन्।

कब्जा गर्ने शक्तिले त्यस्ता संस्थाहरू वा संगठनहरू जसका प्रतिनिधिहरूलाई उसको भू-भागमा र उसको रेखदेखमा उनीहरूका गतिविधिहरू संचालन गर्न अनुमति दिइएको छ तिनीहरूको संख्यालाई सीमित गर्न सक्नेछ। तर यस्तो सीमा सबै संरक्षित व्यक्तिहरूलाई प्रभावकारी र पर्याप्त राहत सामग्रीको आपूर्तिलाई बाधा पुऱ्याउने छैन भन्ने शर्तमा आधारित रहने छ।

रेडक्रसको अन्तर्राष्ट्रिय समितिको यस क्षेत्रको विशेष स्थानलाई सबै समयमा मान्यता दिइनेछ र सम्मान गरिनेछ ।

## धारा १४३

संरक्षक शक्तिहरूका प्रतिनिधिहरू वा दूतहरूले संरक्षित व्यक्तिहरू रहेका सबै ठाउँहरूमा खास गरी नजरबन्दको, हिरासतको वा काम गर्ने ठाउँमा जान अनुमति पाउनेछन् ।

उनीहरूले संरक्षित व्यक्तिहरूले ओगटेका सबै ठाउँहरूमा पहुँच पाउनेछन् र व्यक्तिगत रुपमा वा दोभाषे मार्फत कुनै साक्षी कुनै साक्षी संरक्षित व्यक्तिहरूसँग अन्तरवार्ता गर्न समर्थ हुनेछन् ।

यस्ता भेटघाट अनिवार्य सैनिक आवश्यकताका कारणले बाहेक निषेध गरिने छैन र त्यो पनि केवल अपवाद स्वरुप र अस्थायी रुपमा मात्र गरिनेछ तिनीहरूको अवधि र पटकलाई सीमित गरिनेछैन ।

यस्ता प्रतिनिधिहरू र दूतहरूलाई, उनीहरूले भ्रमण गर्न इच्छा गरेका स्थानहरू छनौट गर्न पूर्ण स्वतन्त्रता हुनेछ । नजरबन्द गर्ने वा कब्जा गर्ने शक्ति, संरक्षक शक्ति र अवस्थाले माग गरेमा भेट्नु पर्ने व्यक्तिहरू सम्बन्धित शक्तिले नजरबन्दहरूका देशबासीहरूलाई पनि सो भ्रमणमा भाग लिन अनुमति दिने भन्नेबारे सहमत हुन सक्छन् ।

रेडक्रसको अन्तर्राष्ट्रिय समितिका प्रतिनिधिहरूले पनि माथि उल्लिखित विशेषाधिकारहरू उपभोग गर्न पाउने छन् । यस्ता प्रतिनिधिहरूको नियुक्ति उनीहरूले आफ्नो कर्तव्य निर्वाह गर्ने भू-भागमा शासन गरिरहेका शक्तिको स्वीकृतिको लागि प्रस्तुत गरिनेछ ।

## धारा १४४

उच्च संविदाकारी पक्षहरू युद्धको समयमा जस्तै शान्तिको समयमा पनि आ-आफ्ना मुलुकहरूमा प्रस्तुत महासन्धिको मूलपाठ सम्भव भएसम्म व्यापक रुपमा प्रचारप्रसार गर्न र खास गरेर तिनीहरूको सैनिक र, सम्भव भए, यसका सिद्धान्तहरूलाई सम्पूर्ण जनतालाई समेत जानकारी दिन असैनिक शिक्षामा समेत यसको अध्ययन, समावेश गर्न जिम्मेवारी लिएका छन् ।

संरक्षित व्यक्तिहरूको हकमा युद्धको समयमा जिम्मेवारी लिने कुनै पनि असैनिक, सैनिक, प्रहरी वा अन्य पदाधिकारीहरूले प्रस्तुत महासन्धिको मूलपाठ आफूसँग राख्नुपर्छ र यसका प्रावधानहरूबाट अवगत रहनुपर्छ ।

## धारा १४५

उच्च संविदाकारी पक्षहरूले एक अर्कालाई स्वीस संघीय परिषद मार्फत र लडाइँको अवधिमा संरक्षक शक्तिहरू मार्फत वर्तमान महासन्धिका र यसको प्रयोग सुनिश्चित गर्न तिनीहरूले अंगिकार गर्न सक्ने कानुन र नियमहरूका आधिकारिक अनुवादहरू सम्प्रेषण गर्नेछन् ।

## धारा १४६

उच्च संविदाकारी पक्षहरूले वर्तमान महासन्धिको निम्नलिखित धारामा परिभाषित गरिएका कुनै पनि गम्भीर उल्लंघन गर्ने वा सो गर्नको लागि आदेश दिने व्यक्तिको लागि प्रभावकारी दण्डात्मक सजायको प्रावधान गर्न कुनै पनि आवश्यक कानुन बनाउन सहमत भएका छन् ।

यस्ता गम्भीर उल्लंघन गरेका वा गर्न आदेश दिएको आरोप लागेका व्यक्तिहरूको खोजी गर्नु र उनीहरूको राष्ट्रियतालाई वास्ता नगरी उनीहरूलाई आफ्ना अदालतहरू समक्ष ल्याउनु हरेक उच्च संविदाकारी पक्षको कर्तव्य हुनेछ । यसले, यदि चाहेमा यसका आफ्नै कानुनका प्रावधानहरू अनुसार यस्ता व्यक्तिहरूलाई अर्को सम्बन्धित उच्च संविदाकारी पक्षलाई हस्तान्तरण गर्न सक्नेछ यदि यस्तो उच्च संविदाकारी पक्षले उल्लंघनलाई प्रथम दृष्टिमै देखिने खालको मुद्दा बनाएको छ भने ।

प्रत्येक उच्च संविदाकारी पक्षले निम्नलिखित धारामा परिभाषित गम्भीर उल्लंघनहरू बाहेक वर्तमान महासन्धिका प्रावधानहरूका विपरीत हुने सबै कार्यहरूलाई दबाउनको लागि आवश्यक उपायहरू गर्नेछ ।

सबै अवस्थामा अभियुक्त व्यक्तिहरू उचित सुनुवाई र प्रतिरक्षाका सुरक्षा उपायहरूबाट लाभान्वित हुनेछन् जुन धारा १०५ बाट उपलब्ध गराइएका १२ अगस्त, १९४९ को युद्धबन्दीहरूसँग गरिने व्यवहारसँग सम्बन्धित जेनेभा महासन्धिमा उल्लिखित प्रावधानहरू भन्दा कम अनुकुल हुनेछैन ।

## धारा १४७

वर्तमान महासन्धिले संरक्षण गरेका व्यक्तिहरू वा सम्पत्ति विरुद्धमा कार्य गरिएमा यस अघिको धारासँग सम्बन्धित गम्भीर उल्लंघनहरूमा निम्नलिखित कार्यहरू पर्दछन् : जथाभावी हत्या, यातना वा अमानवीय व्यवहार, जानाजानी शरीर वा स्वास्थ्यलाई ठूलो पीडा वा गम्भीर चोट पुग्ने जैविकीय प्रयोग, गैरकानुनी देश निकाला वा स्थानान्तरण वा संरक्षित व्यक्तिहरुको गैरकानुनी थुना, शत्रुशक्तिको सेनामा सेवा गर्न संरक्षित व्यक्तिलाई बाध्य पार्नु वा वर्तमान महासन्धिमा तोकिएको स्वच्छ र नियमित पुर्पक्षको अधिकारबाट कुनै संरक्षित व्यक्तिलाई बन्चित गर्नु, बन्धक

बनाउनु र सैनिक आवश्यकता अनुसार मुनासिब नभएको र गैरकानुनी र उच्छृंखल तरिकाले सम्पत्तिलाई व्यापक क्षति पुऱ्याउनु वा अधिग्रहण गर्नु ।

## धारा १४८

कुनै पनि उच्च संविदाकारी पक्षलाई यस अघिको धारामा निर्दिष्ट उल्लंघनहरूका सम्बन्धमा ऊ आफैँले वा अरु कुनै उच्च संविदाकारी पक्षले व्यहोर्नु पर्ने कुनै पनि दायित्वबाट आफूलाई वा अन्य कुनै उच्च संविदाकारी पक्षलाई उन्मुक्त गर्न अनुमति दिइनेछैन ।

## धारा १४९

संघर्षको कुनै पक्षको अनुरोधमा महासन्धिको उल्लंघनको आरोपको सम्बन्धमा सरोकार भएका पक्षहरूका बीचमा निर्णय भएको तरीका अनुसार एउटा जाँचबुझ गर्ने व्यवस्थाको गठन गरिनेछ ।

यदि जाँचबुझको प्रक्रियाबारे सहमति हुन सकेन भने पक्षहरूको एकजना मध्यस्थको छनौटमा सहमत हुनुपर्छ जसले अपनाउनु पर्ने प्रक्रियाको बारेमा निर्णय गर्नेछ ।

एकपटक उल्लंघन भएको कुरा स्थापित भइसकेपछि संघर्षका पक्षहरूले यसको अन्त्य गर्नेछन् र कम से कम विलम्ब गरी यसको दमन गर्ने छन् ।

## खण्ड २
## अन्तिम प्रावधानहरू
## धारा १५०

प्रस्तुत महासन्धि अंग्रेजी र फ्रान्सेली भाषाहरूमा सम्पन्न गरिएको छ । दुबै पाठहरू उत्तिकै आधिकारिक छन् ।

स्वीस संघीय परिषदले प्रस्तुत महासन्धिलाई रसियाली र स्पेनी भाषाहरूमा आधिकारिक अनुवाद गर्ने व्यवस्था गर्नेछ ।

## धारा १५१

प्रस्तुत महासन्धि जसमा आजको मिति उल्लेख छ जेनेभामा २१ अप्रिल, १९४९ मा शुरु भएको सम्मेलनमा भाग लिएका शक्तिहरूको नाममा १२ फेब्रुअरी, १९५० सम्म हस्ताक्षरको लागि खुल्ला रहनेछ ।

## धारा १५२

प्रस्तुत महासन्धिको अनुमोदन जति सक्दो चाँडो गरिनेछ र यस्ता अनुमोदन बर्नमा जम्मा गरिनेछ ।

प्रत्येक अनुमोदनको लिखतको एउटा अभिलेख तयार गरिनेछ र स्वीस संघीय परिषदद्वारा यस अभिलेखका प्रमाणित प्रतिलिपिहरू महासन्धिमा हस्ताक्षर गर्ने सबै शक्तिहरूलाई वा जसको सम्मिलनबारे सूचित गरिएको छ। ती शक्तिहरूलाई पठाइनेछ।

## धारा १५३

वर्तमान महासन्धि कम्तिमा दुईओटा अनुमोदनका लिखतहरू दाखिला भएको छ महिनापछि लागू हुनेछ।

त्यसपछि प्रत्येक उच्च संविदाकारी पक्षको हकमा अनुमोदनको लिखत दाखिला गरेको छ महिनापछि यो लागू हुनेछ।

## धारा १५४

जमिनमाथि हुने लडाइँको कानुन र प्रथा सम्बन्धी २९ जुलाई, १८९९ वा १८ अक्टुवर, १९०७ को हेग महासन्धि अन्तरगत बाँधिएको र वर्तमान महासन्धिका पक्ष भएका शक्तिहरू बीचको सम्बन्धमा यो अन्तिम महासन्धि माथि उल्लिखित हेग महासन्धिहरूसँग संलग्न नियमावलीहरूका खण्डहरू २ र ३ का पूरक हुनेछन्।

## धारा १५५

प्रस्तुत महासन्धि लागू भएको मितिदेखि वर्तमान महासन्धिमा हस्ताक्षर नगरेका कुनै पनि शक्तिको नाममा प्रस्तुत महासन्धिमा सम्मिलनको लागि खुल्ला रहनेछ।

## धारा १५६

सम्मिलनहरूबारे स्वीस संघीय परिषदलाई लिखित रुपमा सूचित गरिनेछ र तिनीहरू प्राप्त भएको मितिले छ महिनापछि लागू हुनेछन्।

स्वीस संघीय परिषदले शक्तिहरू जसको नाममा महासन्धिमा हस्ताक्षर गरिएको छ वा जसले गरेको सम्मिलनबारे सूचित गरेको छ, ती सबैलाई सम्मिलनबारे जानकारी गराउनेछ।

## धारा १५७

धारा २ र ३ मा प्रावधान गरिएका अवस्थाहरूले लडाइँ वा कब्जा शुरु हुनुभन्दा अघि वा पछि संघर्षका पक्षहरूले दाखिला गरेका अनुमोदन वा सूचित गरेका सम्मिलनहरूलाई तत्काल प्रभावी बनाउनेछन्। स्वीस संघीय परिषदले संघर्षरत पक्षहरूबाट प्राप्त कुनै पनि अनुमोदन वा सम्मिलनबारे सबैभन्दा छिटो तरिकाले सूचित गर्नेछ।

## धारा १५८

प्रत्येक उच्च संविदाकारी पक्षलाई वर्तमान महासन्धि परित्याग गर्ने स्वतन्त्रता हुनेछ।

परित्याग गरिएको सूचना, स्वीस संघीय परिषदलाई लिखित रुपमा दिइनेछ जसले यसबारे सबै उच्च संविदाकारी पक्षहरूको सरकारलाई संप्रेषण गर्नेछ।

सो परित्यागबारे स्वीस संघीय परिषदलाई सूचना दिइएको एक वर्षपछि लागू हुनेछ। तर परित्याग गर्ने शक्ति संघषमा संलग्न भएको समयमा परित्याग गरिएको सूचना गरिएको रहेछ भने, सो सूचना शान्ति स्थापना नभएसम्म र वर्तमान महासन्धिले संरक्षण गरेका व्यक्तिहरूको रिहाइ, फिर्ता र पुनर्स्थापना गर्ने कारवाहीहरूको अन्त्य नभएसम्म प्रभावमा आउनेछैन।

यस्तो परित्याग, परित्याग गर्ने शक्तिको हकमा मात्र लागू हुनेछ। यस कार्यले सभ्य मानिसहरू बीच स्थापित रीतिरिवाज, मावताका विधान सार्वजनिक सद्विवेकका निर्देशहरूबाट निःसृत भएका अन्तर्राष्ट्रिय कानुनका सिद्धान्तहरू अनुसार त्यस्ता संघर्षका पक्षहरूले पूरा गर्नुपर्ने कर्तव्यमा कुनै पनि तरिकाले कमी गर्नेछैन।

## धारा १५९

स्वीस संघीय परिषदले संयुक्त राष्ट्र संघको सचिवालयमा प्रस्तुत महासन्धिलाई दर्ता गराउनेछ। स्वीस संघीय परिषदले प्रस्तुत महासन्धिको सम्बन्धमा यसलाई प्राप्त भएका सबै अनुमोदनहरू, सम्मिलनहरू र परित्यागहरूबारे संयुक्त राष्ट्र संघको सचिवालयलाई पनि सूचित गर्नेछ।

यसको साक्षीको रुपमा अधोहस्ताक्षरीहरूले आ-आफ्ना पूर्ण अधिकारपत्रहरू दाखिला गरेर प्रस्तुत महासन्धिमा हस्ताक्षर गरेका छन्।

१२ अगस्त, १९४९ का दिन यसलाई अंग्रेजी र फ्रान्सेली भाषामा तयार गरियो। यसको मूलप्रतिलाई स्वीस महासंघको अभिलेखालयमा दाखिला गरिनेछ। स्वीस संघीय परिषदले यसका प्रमाणित प्रतिहरू, प्रत्येक हस्ताक्षरकर्ता र सम्मिलनकर्ता राष्ट्रलाई संप्रेषण गर्नेछ।

# परिशिष्ट १

## अस्पताल र सुरक्षित क्षेत्रहरू र इलाकाहरूसँग सम्बन्धित सम्झौताको मस्यौदा

*(धारा १४ सँग सम्बन्धित)*

### धारा १

अस्पताल र सुरक्षित क्षेत्रहरू युद्ध मैदानमा घाइते तथा बिरामी भएका सैनिकहरूको अवस्था सुधारसम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा २३ तथा युद्धको समयमा गैरसैनिक व्यक्तिहरूको संरक्षणसम्बन्धी १२ अगस्त, १९४९ को जेनेभा महासन्धिको धारा १४ मा उल्लिखित व्यक्तिहरू तथा यी क्षेत्रहरू र इलाकाहरूको संगठन र प्रशासनको जिम्मा दिइएका र त्यहाँ रहेका व्यक्तिहरूको हेरचाह गर्ने कर्मचारीहरूको निम्ति सख्त रुपमा आरक्षण गरिनेछ।

तथापि यस्ता क्षेत्रहरूभित्र स्थायी घर भएका व्यक्तिहरूलाई पनि त्यहाँ बस्ने अधिकार हुनेछ।

### धारा २

अस्पताल र सुरक्षित क्षेत्रहरूमा जुनसुकै हैसियतमा बसिरहेको व्यक्तिहरूले यस्ता क्षेत्रभित्र या बाहिर, सैनिक कारबाहीसँग प्रत्यक्ष सम्बन्ध रहेको कार्य अथवा युद्धसँग सम्बन्धित वस्तुहरूको उत्पादन गर्ने कार्य गर्ने छैनन्।

### धारा ३

अस्पताल र सुरक्षित क्षेत्रहरू स्थापना गर्ने शक्तिले यस्तो क्षेत्रमा घर गरी बस्न र प्रवेश गर्ने अधिकार नभएका व्यक्तिहरूको प्रवेशलाई रोक लगाउन आवश्यक सबै किसिमको उपायहरू अवलम्बन गर्नेछ।

### धारा ४

अस्पताल र सुरक्षित क्षेत्रहरूले निम्न उल्लिखित शर्तहरू पूरा गर्नेछन् :

(क) यस्ता अस्पताल र क्षेत्रहरूले यिनीहरूलाई स्थापना गर्ने शक्तिको मातहतमा रहेको भु-भागको सानो भागमात्र ओगट्ने छन्।

(ख) बसोबासको सम्भाव्यतासँग सम्बन्धित यी क्षेत्रहरूमा थोरै जनसंख्या मात्र रहनेछन्।

(ग) यी स्थलहरू सबै प्रकारका सैनिक कारबाहीको निशाना वा विशाल औद्योगिक र प्रशासकीय संस्थापनाहरूबाट निकै टाढा र मुक्त रहनेछन्।

(घ) हरेक सम्भाव्यता दृष्टिकोणको युद्ध संचालन गर्न महत्वपूर्ण इलाकामा यस्ता क्षेत्रहरू रहनेछैनन्।

## धारा ५

अस्पताल तथा सुरक्षित क्षेत्रहरूले निम्न उल्लिखित दायित्वहरू पूरा गर्नु पर्नेछ :

(क) यिनीहरूसँग भएका संचार र यातायातका साधनहरू सेनाका कर्मचारीहरू र वस्तुहरू ढुवानीको निम्ति मात्र भए पनि प्रयोग गर्ने छैनन् ।

(ख) यिनीहरूले कुनै पनि हालतमा आफूलाई सैनिक साधनहरूबाट प्रतिरक्षा गर्नेछैनन् ।

## धारा ६

अस्पताल तथा सुरक्षित क्षेत्रहरूमा सेतो पृष्ठभूमिमा रातो टेढो चेप्टो धर्साका चिन्हहरू राखिनेछन्, यस्ता चिन्हहरू भवनहरू र बाहिरी हातामा राखिने छन् ।

घाइते र बिरामीहरूको निम्ति मात्र भनी छुट्याइएका क्षेत्रहरूमा सेतो पृष्ठभूमिमा रातो रेडक्रस (रेडक्रेसेन्ट, रेड लायन एण्ड सन) को चिन्ह लगाउन सकिने छ ।

यी क्षेत्रमा रातमा उपयुक्त प्रकाशमय चिन्हहरू प्रयोग गर्न सकिनेछ ।

## धारा ७

सम्बन्धित शक्तिहरूले सबै उच्च संविदाकारी पक्षहरूलाई शान्ति कालमा अथवा संघर्ष शुरु हुनासाथ आफ्ना मातहतका भू-भागमा रहेका यस्ता अस्पताल र सुरक्षित क्षेत्रहरूको सूचीको जानकारी दिनेछ । यसको साथै तिनीहरूले संघर्षको अवधिमा स्थापना गरिएका नयाँ क्षेत्रहरूको सम्बन्धमा पनि जानकारी दिनेछन् ।

विपक्षीले माथि उल्लिखित सूची प्राप्त गर्नासाथ यस्ता क्षेत्रका स्थापना गरिनेछ ।

यदि विपक्षीले वर्तमान सम्झौताका शर्तहरू पूर्णरुपमा पालना नभएको भन्ने ठान्दछ भने, यसले यस्ता क्षेत्रको जिम्मेवार पक्षलाई तत्काल सूचना पठाएर त्यस्ता क्षेत्रलाई मान्यता दिन अस्वीकार गर्न सक्नेछ अथवा यस्ता क्षेत्रलाई धारा ८ मा व्यवस्था गरिएको नियन्त्रण गर्ने संस्थामा आधारित हुने गरी स्वीकृति जनाउन सक्नेछ ।

## धारा ८

विपक्षीले स्थापना गरेको एक अथवा धेरै अस्पताल र सुरक्षित क्षेत्रहरूलाई मान्यता दिने शक्तिले यो सम्झौतामा व्यवस्था गरिएका शर्तहरू र दायित्वहरू पूरा गरेको छ कि छैन भनी निश्चित गर्नको निम्ति आवश्यक नियन्त्रण कार्य गर्न एक वा धेरै विशेष आयोगको स्थापना गर्ने माग गर्न सक्नेछ ।

यस उद्देश्य पूर्तिको निम्ति यसता विशेष आयोगहरूका सदस्यहरूले विभिन्न सुरक्षित क्षेत्रहरूमा स्वतन्त्र रुपमा प्रवेश गर्न पाउनेछन् र त्यहीँ बस्न पनि सक्नेछन् । उनीहरूलाई आफ्ना निरीक्षण कार्य गर्न आवश्यक सबै सुविधाहरू दिइनेछ ।

## धारा ९

यदि विशेष आयोगहरूले यो सम्झौताका शर्तहरूदेखि विपरित छन् भन्ने कुराहरू पत्ता लगाएमा यस्ता क्षेत्रलाई मातहतमा राख्ने शक्तिको ध्यान त्यस्ता कुराहरूप्रति आकर्षण गर्नेछन् र पाँच दिनभित्र यस्ता अमिल्दा कुराहरूको सुधार गर्न म्याद दिनेछन् । त्यस्तै यी आयोगहरूले यस्ता क्षेत्रलाई मान्यता दिने शक्तिलाई पनि जानकारी दिनेछन् ।

यदि यस्ता क्षेत्रलाई मातहतमा राख्ने शक्तिले दिइएको म्यादभित्र सुधार नगरी म्याद गुजारेमा, विपक्षीले आफू त्यस्ता क्षेत्रसम्बन्धी गरिएको वर्तमान सम्झौता मान्न बाध्य नभएको कुरा घोषणा गर्न सक्नेछ ।

## धारा १०

एउटा अथवा बढी अस्पताल र सुरक्षित क्षेत्रहरू स्थापना गर्ने शक्ति र यस्ता अस्पतालहरू र क्षेत्रहरू अस्तित्वमा छन् भनि सूचना प्राप्त गर्ने विपक्षीहरूले धारा ८ र ९ मा उल्लिखित विशेष आयोगहरूमा सदस्य बन्न उपयुक्त व्यक्तिहरू मनोनित गर्नेछन् अथवा संरक्षक शक्तिहरू अथवा अन्य तटस्थ शक्तिहरूद्वारा मनोनित गराउनेछन् ।

## धारा ११

कुनै पनि परिस्थितिमा अस्पताल र सुरक्षित क्षेत्रहरू हमलाको निसाना बन्ने छैनन् । यी सबैलाई संघर्षका पक्षहरूले सदा सर्वदा सुरक्षा र आदर गर्नेछन् ।

## धारा १२

यदि भू-भाग कब्जामा पर्न गएको खण्डमा त्यहाँभित्र रहेको अस्पताल र सुरक्षित क्षेत्रहरूले यथावत आदर प्राप्त गरिरहने छन् र प्रयोगहरूमा रहिरहने छन् ।

तिनीहरूको उद्देश्यलाई कब्जा गर्ने शक्तिले, आश्रय लिई बसिरहेका व्यक्तिहरुको सुरक्षाको सुनिश्चितताका सबै उपायहरु अवलम्बन गरिने शर्तमा, परिवर्तन गर्न सक्नेछ ।

## धारा १३

अस्पताल र सुरक्षा क्षेत्रहरू सरह नै शक्तिहरूले प्रयोग गर्ने इलाकाहरूको सम्बन्धमा पनि यो सम्झौता लागू हुनेछ ।

# परिशिष्ट २
# सामूहिक सहायताका वस्तुसम्बन्धी
# नियमहरूको मस्यौदा
*(धारा ५९ र १०९ सँग सम्बन्धित)*

## धारा १

सामूहिक सहायताका वस्तुका खेपहरूको जिम्मेवार नजरबन्दीहरूको समितिहरूलाई त्यस्ता वस्तुहरू सो समिति रहेको नजरबन्दीको प्रशासनमा आश्रित सबै नजरबन्दहरू, अस्पतालहरूमा अथवा कैदमा रहेका अथवा अन्य कैदी सुधारगृहमा रहेका नजरबन्दहरूलाई वितरण गर्न स्वीकृति दिइनेछ ।

## धारा २

सामूहिक सहायताका वस्तुका खेपहरूको वितरण दाताको निर्देशन र नजरबन्दहरूको समितिले तयार गरेको योजना अनुसार हुनेछ । औषधिको भण्डारको प्रयोगको सम्बन्धमा भने वरिष्ठ चिकित्सक अधिकारीहरूसँग भएको सम्झौतामा भएको प्राथमिकताको आधारमा र अस्पताल र जीर्ण रोगीको स्याहार सुसार गर्ने अशक्तालयमा रहेका बिरामीहरूको आवश्यकता पूर्ति गर्न भएको मागको आधारमा दाताको निर्देशनलाई पन्छ्याउन सकिनेछ । यसरी कोरिएका सीमाभित्र बसेर वितरण सदा समानतापूर्वक गरिनेछ ।

## धारा ३

नजरबन्दहरूको समितिहरूका सदस्यहरूलाई प्राप्त वस्तुहरूको गुणस्तर र परिमाण प्रमाणित गरी हेर्न र दाताहरूलाई त्यसको विस्तृत प्रतिवेदन तयार गर्न समर्थ तुल्याउनको निम्ति सहायताका वस्तु प्राप्त हुने शिविरको नजिकको रेलवे स्टेशन अथवा अन्य स्थलसम्म जान स्वीकृति दिइनेछ ।

## धारा ४

नजरबन्दहरूको समितिहरूलाई सामूहिक सहायता वस्तुहरूको वितरण उनीहरूलाई नजरबन्दी तुल्याइएका शिविरहरूको शाखा शिविरहरू र जोडिएका शिविरहरूमा उनीहरूको निर्देशन अनुसार भएका छन् कि छैनन् भन्ने कुरा जाँची हेर्न आवश्यक सुविधा प्रदान गरिनेछ ।

## धारा ५

नजरबन्दहरूको समितिहरू र यसका सदस्यहरू र यसका श्रमिक दलहरू अथवा अस्पतालहरू तथा अशक्तालयहरूका वरिष्ठ चिकित्सक अधिकारीहरूलाई सहायताका वस्तुहरूसँग सम्बन्धित (

वितरण, आवश्यकता, परिमाण इत्यादि) दाताहरूको निम्ति प्रश्नावली- (फर्म) भर्न स्वीकृति दिइनेछ। भरिएका यस्ता फर्महरू र प्रश्नावलीहरू दाताहरूलाई अविलम्ब पठाइनेछ।

## धारा ६

नजरबन्दहरूलाई सामूहिक सहायताका वस्तुहरू उनीहरूलाई राखिएका स्थलमा नियमित रुपमा उपलब्ध गराइरहन र नयाँ आउने नजरबन्दहरूको निम्ति आवश्यक पर्ने सामूहिक सहायताका वस्तुहरूको यथेष्ट मात्रामा मौज्दात राख्नको निम्ति नजरबन्दका समितिहरूलाई स्वीकृति दिइनेछ। यस प्रयोजनको निम्ति उनीहरूको मातहतका उपयुक्त भण्डारगृह रहनेछ, प्रत्येक भण्डारगृहको निम्ति दुईटा ताल्चा उपलब्ध गराइनेछ - त्यसमध्ये एउटा ताल्चाको साँचो नजरबन्दको समितिसँग र अर्को ताल्चाको साँचो नजरबन्द राखिएको स्थलको समादेशकसँग रहनेछ।

## धारा ७

उच्च संविदाकारी पक्षहरू, विशेष गरी बन्दी तुल्याउने शक्तिहरूले यथासम्भव सर्वसाधारण जनतालाई खाद्यवस्तु आपूर्ति गर्ने नियमहरूको अधिनमा रहने गरी नजरबन्दहरूलाई वितरण गर्न सामूहिक सहायताका वस्तुहरू उनीहरूको भू-भागमा बनेका वस्तुहरू खरिद गर्न अधिकार दिनेछन्। त्यस्तै प्रकारले यस्ता खरीद व्यवस्था गर्नको निम्ति आवश्यक रकम उनीहरूले हस्तान्तरण गर्न र अन्य प्राविधिक तथा प्रशासनिक प्रकृतिका व्यवस्थालाई आवश्यक सुविधा पुऱ्याउने छन्।

## धारा ८

माथि उल्लिखित प्रावधानहरू नजरबन्दहरूले आफू नजरबन्दी हुने स्थलमा आई पुग्नुभन्दा अघि अथवा स्थानान्तरण भइरहेका क्रममा सामूहिक सहायताका वस्तुहरू पाउनुपर्ने उनीहरूको अधिकारमा बाधाको रुपमा रहनेछैन, त्यस्तै यी प्रावधानहरू संरक्षक शक्तिका प्रतिनिधिहरू, रेडक्रसको अन्तर्राष्ट्रिय समिति अथवा यस्ता वस्तुहरू नजरबन्दहरूलाई पठाउने जिम्मेवार र अन्य कुनै माध्यमबाट यस्ता वस्तुहरू उनीहरूलाई वितरण गर्न सुनिश्चित गर्ने इकाइ र नजरबन्दहरूलाई सहायता गर्ने अन्य मानवीय संस्थाको निम्ति पनि बाधाको रुपमा रहेको छैन।

## परिशिष्ट ३

## १. नजरबन्दीको पत्र

*(धारा १०६ सँग सम्बन्धित)*

१. अगाडिको भाग

| | |
|---|---|
| गैरसैनिक नजरबन्द हुलाक | हुलाक दस्तुर नलाग्ने |
| हुलाक पत्र | |
| **महत्वपूर्ण**<br>नजरबन्दले आफू नजरबन्दी बनेको लगत्तै यो पत्र भर्नुपर्छ र प्रत्येक पटक आफ्नो ठेगाना परिवर्तन हुँदा अथवा अर्को शिविरमा स्थानान्तरण भएमा अथवा अस्पतालमा बस्नु परेमा पनि यो पत्र भर्नुपर्छ ।<br><br>यो पत्र प्रत्येक बन्दीले आफ्नो नातेदारलाई पठाउने विशेष पत्र सरहको होइन । | संरक्षित व्यक्तिहरूको निम्ति केन्द्रीय सूचना विभाग<br>रेडक्रसको अन्तर्राष्ट्रिय समिति |

२. पछाडिको भाग

| | | |
|---|---|---|
| बुझिने गरी ठूलो अक्षरमा लेख्ने : १. राष्ट्रियता | | |
| २. थर (वंशजनाम) | ३. पहिलो नाम (पूरा) | ४. पिताको पहिलो नाम : |
| ५. जन्म मिति : | | ६. जन्म स्थान : |
| ७. व्यवसाय :<br>८. बन्दी हुनुभन्दा अघिको ठेगाना :<br>९. नजिकको नातेदारको ठेगाना :<br>● १०. बन्दी तुल्याइएको मिति :<br>अथवा अस्पताल इत्यादिबाट आएको मिति :<br>● ११. स्वास्थ्यको स्थिति : | | |
| १२. हालको ठेगाना :<br>१३. मिति : | <br>१४. हस्ताक्षर | |
| ● लागू नहुने कुरा नलेख्ने - नयाँ कुनै कुरा नथप्ने - कार्डको पछाडिको व्याख्या हेर्ने | | |

(नजरबन्दी पत्रको निश्चित आकार १०×१५ सेन्टिमिटर)

# परिशिष्ट ३

## २. चिठ्ठी

गैरसैनिक नजरबन्द सेवा

हुलाक दस्तुर नलाग्ने

पठाउने :

थर र पहिला नाम :

जन्म मिति र स्थान :

नजरबन्द रहेको ठेगाना :

प्रापक :

गल्ली र नम्बर

पत्र पुग्नुपर्ने ठेगाना (ठूलो अक्षरमा)

प्रान्त अथवा विभाग

देशको नाम (ठूलो अक्षरमा)

(पत्रको आकार १९×१५ सेन्टिमिटर)

## परिशिष्ट ३

## ३. पत्राचार गर्ने पत्र

## १. अगाडिको भाग

## गैरसैनिक नजरबन्द हुलाक

<table>
<tr><td colspan="2" align="center">हुलाक पत्र</td></tr>
<tr><td>पठाउने</td><td align="right">प्राप्त गर्ने</td></tr>
<tr><td>थर र पहिलो नाम</td><td align="right">गल्ली र नम्बर</td></tr>
<tr><td>जन्म मिति र स्थान</td><td align="right">पत्र पुग्ने ठेगाना (ठूलो अक्षरमा)</td></tr>
<tr><td>नजरबन्दी रहेको ठाउँ</td><td align="right">प्रान्त अथवा विभाग</td></tr>
<tr><td colspan="2" align="center">देशको नाम (ठूलो अक्षरमा)</td></tr>
</table>

२. पछाडिको भाग

<table>
<tr><td align="right">मिति :-</td></tr>
<tr><td>……………………………………………………………………………………</td></tr>
<tr><td>……………………………………………………………………………………</td></tr>
<tr><td>……………………………………………………………………………………</td></tr>
<tr><td>……………………………………………………………………………………</td></tr>
<tr><td>……………………………………………………………………………………</td></tr>
<tr><td align="center">संकेत गरेको धर्कामा मात्र सकेसम्म बुझिने गरी लेख्नुहोला ।</td></tr>
</table>

(पत्रको आकार १०×१४ सेन्टिमिटर)